२०८१, वैशाख

मूल्य रू. २५

# युवामञ्च

https://gorkhapatraonline.com/yuba-manch

- क्यान्सर र यौन
- काजुको जङ्गल



# जीवनधारा

# पानी पँधेरा

वर्ष ३६, अङ्क ११, २०८१ साल वैशाख

April-May 2024

Twitter: @YuvamanchGps | yubamanchmonthly

# यस भित्र

**आवरण चित्र**
केशवराज खनाल



६ **पोलियो पल**

८ **सर्वाधिक मोटे मिनेख**

चिकित्सकले मिनेखको जाँच गर्दा उनको शरीरका तन्तुमा धेरै नै तरल पदार्थ जम्मा भएर तौल बढेको पत्ता लगाएका थिए ।

१२ **रेडियम गर्ल्स**

मुस्किलले २० वर्षपहिले मात्र पत्ता लगाइएको एक रेडियोधर्मी तत्व रेडियम रङमा मिसाइएका कारणले गर्दा घडी चम्किने हो ।

**मान्छे नै चिम्पान्जी बन्यो**

वैज्ञानिक अनुन्धानबाट के देखिएको छ भने लगभग ४० लाख वर्षपहिले मानिस र चिम्पान्जीका पुर्खा छुट्टिएका हुन् । जैविक अध्ययनबाट समेत आधुनिक मानव होमो सेपियन्स र चिम्पान्जीमा १.२३ प्रतिशत मात्र जिन भिन्न रहेको देखिएको छ ।



१८




## २१ महान् गणितज्ञ रामानुजन

असाधारण प्रतिभाका धनी रामानुजनमा गणितको ज्ञान यति असाधारण र गहिरो थियो कि बाल्यकालदेखि नै उनले गणितका धेरै आधारभूत सिद्धान्त व्यावहारिक रुपमा पुष्टि गरेका थिए ।

## ३२ जीवनधारा पानी पँधेरा

नेपाल जलस्रोतमा विश्वकै धनी मुलुक मानिए पनि यहाँ जनसङ्ख्याको एउटा ठूलै हिस्सा पानीको सहज पहुँचबाट वञ्चित छ ।

## ५३ डिजिटल बैङ्क र डिजिटल करेन्सी

शाखा कार्यालय कम हुँदा बैङ्कको सञ्चालन खर्चमा कमी आउँछ । नेपालका लागि भने यस्तो बैङ्कको अभ्यास नौलो हुन्छ ।

## ६७ क्यान्सर र यौन

**युवामञ्चमा लेखरचना तथा चिठीपत्र पठाउँदा निम्न ठेगानामा पठाउनु होला-**

yubmanch@gmail.com

सम्पर्क- सम्पादकीय- ५३५७०३१

गोरखापत्र संस्थान, धर्मपथ, काठमाडौं, पो.ब.नं. २३

**अनलाइनमा युवामञ्च**

https://gorkhapatraonline.com/yuba-manch

http://www.gorkhapatraonline.com/epaper

# युवामञ्च

**कार्यकारी अध्यक्ष**
**विष्णुप्रसाद सुवेदी तथा महाप्रबन्धक**
**लालबहादुर ऐरीद्वारा**
गोरखापत्र संस्थानका लागि
संस्थानको छापाखानामा मुद्रित
तथा प्रकाशित

सम्पादक
उमेशकुमार ओझा

नायब कार्यकारी सम्पादक
भवानी सुवेदी

सह–सम्पादक
शरदराज सुवेदी

वितरण विभाग
तारा बस्याल

उत्पादन विभाग
ओम भुसाल

शुद्धाशुद्धि
बोमबहादुर रायमाझी

लेआउट तथा डिजाइन
रोशनप्रकाश दनुवार

**गोरखापत्र संस्थान**
पो.ब.नं. २३, धर्मपथ, काठमाडौँ, नेपाल।
इमेल : yubmanch@gmail.com
फोन – सम्पादकीय : ५३५७९३१
विज्ञापन : ५३२७४९३, वितरण : ५३२०६३८,
पूर्व क्षेत्र प्रदेश स्तरीय प्रकाशन कार्यालय,
विराटनगर : ०२१–४७१७४६
पश्चिम क्षेत्र प्रदेश स्तरीय प्रकाशन कार्यालय,
कोहलपुर : ०८१–५३१६२२/२३
प्रदेश स्तरीय कार्यालयहरू,
जनकपुर : ०४१–५९०४२९
हेटौँडा : ०५७–५९०६५१
पोखरा : ०६१–५३८५२२
बुटवल : ०७१–५४१४३८
सुर्खेत : ०८३–५९००६०
धनगढी : ०९१–४१२०४३

**एकप्रतिको मूल्य** रु.२५/–
**वार्षिक मूल्य** रु.२५०/–


*सम्पादकीय*

# खुसी मन, सुखी जीवन

खुसी के हो ? के विभिन्न खालका सकारात्मक अनुभवको सँगालोलाई खुसी मान्न सकिन्छ ? वास्तवमा खुसीका अनेक आयाम छन् । थोरैले दिने खुसी, धेरैले दिने खुसी, प्राप्तिको खुसी वा आनन्दमय जीवनको खुसी । वास्तवमा खुसीलाई दुःखीको विपरीत अवस्थाका रूपमा बुझ्न सकिन्छ । कैयौँ यस्ता शब्द छन् जसलाई हामी खुसीको अवस्था दर्शाउन प्रयोग गरिरहेका हुन्छौँ । आनन्द, सुख, सन्तुष्टि, सन्तोष आदिले खुसीको विभिन्न अवस्था बयान गर्दछन् तर खुसीको अवस्थालाई सबैजनामा एकनासले परिभाषित गर्न कठिन छ । आफैँलाई उदाहरण मानेर हेरौँ, तपाईंलाई खुसीको जुन कुरा छ अर्को मानिसलाई पनि त्यही हुन सक्छ र ? पक्कै पनि हुँदैन । मानिसपिच्छे खुसीका कारण र अनुभव फरक फरक हुन्छन् । खुसीको सर्वमान्य रूपरेखा तय छैन । कुनै स्पष्ट कारण नभए पनि मानिस प्रसन्नचित्त रहन्छ भने त्यो नै खुसीको अवस्था हो ।

खुसी हुन प्राप्ति, मिलन, सफलता, आर्जन, मान सम्मान आदि कुनै पनि बाह्य प्रेरक चाहिँदैन सकारात्मक भावना मात्र भएमा मानिसको अनुहार त्यत्तिकै उज्यालो र प्रसन्न देखिन्छ । यसैलाई वास्तविक खुसीको अवस्था भन्न सकिन्छ । जे जति कारण र अनुभूतिले प्राप्त खुसी होस् त्यसले मानिसको जीवनमा महत्त्वपूर्ण भूमिका खेल्दछ । मानिसको जीवन जिउने तरिका यसबाट निर्देशित रहन्छ र उसको जीवनको सम्पूर्ण सार यसमा निहित छ । खुसी भावनाले जीवन सुखी रहन्छ, दुःखी भावनाले जीवन विषादग्रस्त हुन्छ । भन्न सक्छौँ, मानिसको भावना र खुसीको अवस्था अन्तर्निहित छन् । सन्तुष्टि, सुख, आनन्द, तृप्ति आदिको अनुभूति मानिसको भावनात्मक अवस्था हुन् । यिनको सकारात्मक भावना र जीवनको सन्तोषसँग नाता जोडिएको हुन्छ । यसर्थ खुसीका लागि सकारात्मक मनोदशा अनिवार्य सर्त हुन्छ, जसले असल जीवन जिउन सिकाउँछ । असल जीवनले खुसी दिन्छ । अनेक शोधबाट स्पष्टसमेत पारिएको छ, खुसी मनोविज्ञानले शारीरिक स्वास्थ्यमा सुधार, सकारात्मकता तथा हृदय प्रणालीमा स्वास्थ्यलाभ, प्रतिरक्षा प्रणाली सबल, रक्तचाप नियन्त्रणलगायतका लाभ मिल्दछ । दीर्घायु, गुणस्तरीय जीवन र सुखसँग पनि खुसीको सम्बन्ध छ ।

प्रसङ्ग छ सन् २०२४ को 'वर्ल्ड ह्याप्पिनेस रिपोर्ट' को । जसमा नेपाल १४३ देशमध्ये ९३ औँ स्थानमा परेको छ । यो रिपोर्ट तयार पार्न मुख्य रूपमा छ कारक पक्ष कुल गार्हस्थमा आधारित प्रतिव्यक्ति आय, स्वस्थ आयु, सामाजिक सहयोग, स्वतन्त्रता, उदारमन र भ्रष्टाचारप्रतिको धारणालाई केन्द्रमा राखेर तथ्याङ्क विश्लेषण गरिएको भए पनि यी कारक तत्त्वमा मानिसको मनोदशा समग्रमा समेटिएको छ । आयले आर्थिक सन्तुष्टि, सामाजिक सद्भाव र सहयोग तथा उदारमनमा सकारात्मक भावनाको विम्ब, स्वतन्त्रताले आत्मसम्मान र प्रतिष्ठा, भ्रष्टाचारप्रतिको धारणाले समग्र शासकीय व्यवस्थालाई मार्गदर्शन गरी असल समाजको निर्माणमा भूमिका खेल्दछ । यी सबैले सकारात्मक मनोदशा विकास भएर जीवन जिउने तरिका नै भिन्न बन्दछ, मानिसलाई दीर्घायु बनाउँछ । २०८१ सालमा हामी अझै सकारात्मक जीवन जिउने प्रण गरौँ, जीवनलाई खुसीका रङले रङ्गाऔँ । नयाँ वर्षको यही शुभकामना । ■

# उत्तरोत्तर प्रगतिको कामना

युवामञ्च युवाको प्रिय पत्रिका हो । यो पत्रिका पढ्न कहिल्यै पनि छुटाउन सक्दिनँ । २०८० साल चैतको युवामञ्च समयमै पढ्ने अवसर मिल्यो । जासुस बिरालो शीर्षकको लेख साह्रै मन पऱ्यो । अमेन्डाको सङ्घर्ष पढ्ने अवसर मिल्यो । निर्मलकुमार आचार्यले लेखेको जिउँदो बाघको अमर कीर्ति शीर्षकको लेख निकै राम्रो लाग्यो ।

फ्रिलान्सिङको दुनियाँ शीर्षकको अजय शर्माले लेखेको सामग्री ज्यादै रोचक लाग्यो । यमबहादुर दुराले लेखेको परोपकारको भावना समेटिएका पाटीपौवा शीर्षकको सबैले पढ्नै पर्ने रहेछ । केशवराज पौडेलले लेखेको माझीको जीवन नै नदी शीर्षकको लेख पढ्नयोग्य छ । रतन भण्डारीले लेखेको बुद्ध जब राजमहल फर्किए शीर्षकको लेख दोहोऱ्याएर पढेँ ।

मेरो पुस्तकालय अन्तर्गत पत्रकार एवं साहित्यकार पुरुषोत्तम दाहालको बारेमा पढ्ने अवसर मिल्यो । युवामञ्चमा पुस्तक परिचय पनि राख्न सके राम्रो हुने थियो । युवामञ्च परिवारलाई नववर्ष २०८१ को उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।




**– अरुणबहादुर खत्री 'नदी'**
**बूढानीलकण्ठ–४, पासिकोट, काठमाडौँ**

---

## सुनमा सुगन्ध हुने थियो

चैत महिनाको युवामञ्च बेलैमा पढ्न पाइयो । पहिले पहिले अलि ढिला गरी हात लाग्ने यो पत्रिका यो पटक भने बेलैमा बजारका पसलमा सजाएको देख्दा निकै खुसी लागेको छ । यसैगरी बेलैमा सबै अङ्क पढ्ने वातावरण बनिरहोस् भन्ने कामना व्यक्त गर्दछु ।

म यो पत्रिकाको एउटा असल शुभचिन्तक भएको नाताले यसका कमीकमजोरी पनि औँल्याउने गरेको छु । कागजको गुणस्तर र मसीको गुणस्तरमा ध्यान दिए सुनमा सुगन्ध हुने थियो ।

**मुकेश मल्ल**
**घोराही, दाङ**

## अन्याय भयो

युवामञ्च पत्रिकामा प्रकाशित विषयवस्तु स्तरीय र रोमाञ्चक छन् तर समयकाल अनुसार यसको कागज राम्रो छैन । पत्रिकाका अक्षर र तस्बिर पोतिएका हुन्छन् । पढ्न नै गाह्रो हुन्छ । आँखा सद्दे भएका मानिसले समेत चस्मा लगाएर पढ्नुपर्ने । पत्रिकामा मट्टितेल गनाएर पनि हैरान । पत्रिका समात्यो कि पछिसम्म हातमा मट्टितेल गनाउँछ ।

गोरखापत्र संस्थानले पाठकसँग यस खालको अन्याय गर्नु भएन । छपाइमा राम्रो कागज र मसी प्रयोग गरेको भए यस्तो विजोग हुने थिएन । पत्रिकाका सम्पादक र संस्थानको व्यवस्थापनले यस विषयमा ध्यान दिनु पऱ्यो ।

**सुनील क्षेत्री**
**भद्रपुर, झापा**

## नयाँ साजसज्जा होस्


सङ्कटमा गधा

२०८० साल चैतको युवामञ्च समयमै पढ्न पाइयो । यस अङ्कमा प्रकाशित प्रायः जसो लेख रचना रोचक एवं पठनीय नै छन् । त्यसमा पनि साहसी घटना उल्लेख गरिएको लेख अमेन्डाको सङ्घर्ष, ऐतिहासिक लेख जिउदो बाघको अमर कीर्ति तथा धार्मिक लेख बुद्ध जब राजामहल फर्किए निकै रोचक लाग्यो ।

त्यस्तै जासुस बिरालो, सङ्कटमा गधा, सापेक्षित छ समय र परिवर्तन, परोपकारको भावना समेटिएका पाटीपौवा, माझीको जीवन नै नदी, लाहा खेती, मृत्युदण्डले मर्दैन अपराध लेखहरू उपयोगी छन् ।

फूलबारी स्तम्भमा अहिंस्रक सियार/चुमबा लेखले गोरखा जिल्लाका लोपोन्मुख जातिका बारेमा विस्तृत रूपमा परिचय दिएको छ । यस स्तम्भका लेखक त्रिभुवनचन्द्र वाग्लेले प्रत्येक अङ्कमा यस्तै नेपालका अल्पसङ्ख्यक एवं लोपोन्मुख जातिका बारेमा विस्तृत जानकारी दिने गर्नुहुन्छ । यसका लागि उहाँलाई धन्यवाद ।

त्यस्तै घातक हुन्छ प्यान्क्रियाजको क्यान्सर शीर्षकको स्वास्थ्य सम्बन्धित लेख सबैका लागि उपयोगी छ । आगामी अङ्कमा पनि यस्तै स्वास्थ्य सम्बन्धित लेखले निरन्तरता पाऊन् । त्यस्तै खेल र खेलाडी सम्बन्धित लेख महिनाको खेलाडी स्तम्भमा महिला फुटबल खेलाडी प्रीति राई, उकालो लाग्दै महिला फुटबल र पकेट हरक्युलस नेम सुलेमान शीर्षकका सामग्री धेरै राम्रो लाग्यो ।

समग्रमा भन्नु पर्दा युवामञ्चको चैत अङ्क पठनीय र रोचक छ । युवामञ्चका आगामी अङ्कमा यस्तै उपयोगी लेखलाई स्थान दिइयोस् ।

अन्त्यमा नयाँ साल २०८१ को सम्पूर्ण पाठकवर्ग तथा युवामञ्च परिवारलाई शुभकामना दिन चाहन्छु । साथै युवामञ्चले नयाँ सालदेखि नयाँ साजसज्जामा पठनीय सामग्री लिएर पाठकसामु आओस् भन्नु चाहन्छु ।

**–अच्युतमानसिंह प्रधान 'उत्सुक'**
**बालुवाटार, काठमाडौँ**

## विविधताले भरिपूर्ण

मलाई युवामञ्चले सधैँ ऊर्जा दिने गरेकाले म सधैँ यो पत्रिका पढ्दै आइरहेको छु । युवामञ्चमा सामग्रीको विविधता भए पनि युवालाई विदेश पलायन हुनबाट रोक्न के गर्न सकिन्छ भन्ने जस्ता विषयमा पनि लेखहरू पढ्न पाए राम्रो हुने थियो ।

युवा भनेका राष्ट्रका महत्त्वपूर्ण गहना हुन् भनिन्छ तर व्यवहारमा त्यस्तो नदेखिँदा समस्या आएको जस्तो लाग्छ । त्यसकारण आगामी अङ्कमा युवालाई प्रोत्साहन हुने खालका लेख रचनाले स्थान पाउने आशा गरेको छु ।

**घनश्याम राना**
**पाल्पा**



डबली

# पोलियो पल

सन् १९५२, गर्मीका दिन थिए। टेक्सासका पल अलेक्जेन्डरलाई सन्चो महसुस भइरहेको थिएन। उनको घाँटी र टाउकोमा चोट लागेको थियो तथा उच्च ज्वरोले जिउ थला परेको। केही दिनमै छ वर्षका पल हिँडडुल गर्न, बोल्न र निल्न पनि नसक्ने भए। उनलाई पोलियो सङ्क्रमण भएको थियो।



घाँटीमुनि लगभग पक्षाघात जस्तो भएर थला परेका पल त्यसपछिका सात दशक ठूलो स्टिलको भेन्टिलेटर 'आइरन लङ' अर्थात् लौह फोक्सोको सहारामा बाँचे। गत मार्च ११ मा ७८ वर्षको उमेरमा उनले अन्तिम सास लिए। सन् १९४० र १९५० को दशकमा अस्पतालका पोलियो कक्ष (वार्ड)मा आम देखिने लौह फोक्सोमा बाँचिरहेका पल अन्तिम व्यक्ति थिए। अघिल्लो महिना मात्र उनी कोभिड–१९ बाट सङ्क्रमित भएका थिए तर पछि निको भए।

पलमा गजबको इच्छाशक्ति थियो। जीवनका लागि लौह फोक्सोमा कैद भएर बस्नु परे पनि उनले खानपिन र बाँच्नमै सीमित भएर दिन बिताएनन्। उनले स्नातकसम्म अध्ययन गरे। त्यसपछि साउदर्न मेथोडिस्ट युनिभर्सिटीबाट छात्रवृत्ति पाएर थप अध्ययन गरे। जबकि त्यस युनिभर्सिटीले सुरुमा उनको अपाङ्गता देखेर भर्ना गर्न समेत मानेको थिएन।

सन् १९८४ मा पलले युनिभर्सिटी अफ टेक्सास अन्तर्गत अस्टिन ल स्कुलबाट स्नातकसमेत गरे। त्यसपछिका दिनमा पलले एक अधिवक्ताका रूपमा दिन बिताएका थिए। पल दिउँसोको अधिकांश समय लौह फोक्सोबिना व्यतीत गर्न सक्थे।

सन् २०२० मा पलले आफ्ना अनुभवमा आधारित रहेर एउटा पुस्तक लेखे, 'थ्री मिनट्स फर अ डग : माई लाइफ इन एन आइरन लङ'। यो पुस्तक लेख्न उनलाई पाँच वर्ष लागेको थियो। पुस्तकका सबै शब्द उनले आफैँ लेखेका थिए र आफ्नो मुखमा जोडिएको एउटा डन्डीमा राखिएको कलमद्वारा उनी लेख्दथे।

यस पुस्तकको शीर्षक पललाई बाल्यकालमा उपचार गर्ने चिकित्सकद्वारा प्रेरित छ। ती चिकित्सकले पललाई तीन मिनेट आफैँ सास लिन सकेमा एउटा कुकुर ल्याएर दिने वाचा गरेका थिए। त्यसो गर्नका लागि उनले आफ्नो घाँटीको मांसपेशीद्वारा वायुलाई आफ्नो फोक्सोमा पुऱ्याउन भ्यागुता जसरी सास लिन सिके। पललाई यस विधिमा अब्बल हुन एक वर्ष लाग्यो तर उनलाई समयमै जिन्जर नाम राखिएको कुकुरको छाउरा उपहारमा दिइएको थियो।

विश्व स्वास्थ्य सङ्गठनका अनुसार इस्वी संवत्को २० औँ शताब्दीको मध्यतिर पोलियो (पोलियोमाइलाइटिस) एक यस्तो भयङ्कर स्वास्थ्य समस्याका रूपमा अगाडि आयो जसले गर्दा हरेक वर्ष पाँच लाख मानिसको मृत्यु हुन्थ्यो वा उनीहरू पक्षाघातको सिकार हुन्थे। पोलियो



भाइरसले केन्द्रीय स्नायु प्रणालीमा आक्रमण गर्दा यो रोग सङ्क्रामक हुन्छ। अमेरिकाका ३२ औँ राष्ट्रपति फ्रान्कलिन डेलानो रोजभेल्ट सन् १९२१ मा पोलियो सङ्क्रमण भएर आफ्ना गोडा चलाउन नसक्ने भएका थिए।

पोलियो भयङ्कर स्वास्थ्य समस्या बन्दा त्यसको सङ्क्रमणले 'डायाफ्राम' पक्षाघात भएकालाई जीवित राख्न लौह फोक्सो अनिवार्य भएको थियो। यस चिकित्सा उपकरणले 'भ्याकुम' का माध्यमद्वारा ऋणात्मक चाप उत्पन्न गरी ती रोगीलाई सास लिन मद्दत गर्दथ्यो। ऋणात्मक चापका कारण फोक्सो फुक्ने र सास भित्र लिन सहज हुन्थ्यो।

सन् १९५३ मा भाइरोलोजिस्ट योनास साल्कले पोलियोको प्रभावकारी खोप आविष्कार गरेका थिए। तापनि अमेरिकीले पोलियो खोप लिनमा त्यति चासो देखाएनन्। सन् १९५६ मा प्रख्यात गायक एल्विस प्रिस्लले खोप लगाएर खोप लगाउने सार्वजनिक अभियानलाई बल दिए र अन्ततः सन् १०७९ मा अमेरिकामा पोलियो उन्मूलन भयो।

एक तथ्याङ्क अनुसार सन् १९५९ मा अमेरिकामा १२ सय जना लौह फोक्सोका भरमा जीवित थिए र सन् २००४ सम्म आइपुग्दा त्यो सङ्ख्या ३९ मा झर्‍यो, पलको निधनसँगै शून्य भएको छ।

पोलियो सङ्क्रमण भएको दुई वर्षपछि सन् १९५४ मा पलले भ्यागुता शैलीमा सास लिन सिक्न थालेका थिए। यसै शैलीका कारण लौह फोक्सोमा पलले पूर्ण निर्भर रहनु परेन। पलले बेलाबेलामा लौह फोक्सोको सहारा लिनु पर्थ्यो तर उनले दुई सय ७५ किलो तौलको लौह फोक्सोकै सहारामा बाँच्ने अठोट लिए र आधुनिक 'पोर्टेबल' अपनाएनन्। मार्च महिनामा मात्र गिनिज बुक अफ वर्ल्ड रेकर्डले फललाई लौह फोक्सोमा सर्वाधिक बाँच्ने बिरामीको उपाधि दिएको थियो। ■

*-युवामञ्च*




**पृथ्वीमा अस्तित्वमा आएको सबैभन्दा ठूलो सर्प हो टाइटनबोआ। यो सर्प ४२ देखि ४७ फिटसम्म लामो हुने र साढे एघार सयसम्म तौलका हुन्थे। यो सर्पको टाउको मानिसको औसत टाउको आकारको हुन्थ्यो। यो सर्प करिब छ करोड वर्ष पहिले पृथ्वीमा विचरण गर्दथ्यो। ■**

*-युवामञ्च*

# फोक्सोमा रूख



सन् २००९ मा खोक्दा खकारमा धेरै रगत आउन थालेपछि रूसका २८ वर्षीय अर्थियम सिडोर्किन चिकित्सककहाँ जाँच गराउन गएका थिए । सुरूमा त चिकित्सकले उनलाई क्यान्सर भएको आशङ्का गरे र निदान गरेको केही समयमै चिकित्सकले शल्यक्रिया गरी आशङ्कित ट्युमर बाहिर निकाले । ट्युमरमा क्यान्सरजन्य वृद्धि हटाएपछि चिकित्सक तीन छक्क परे । त्यसको कारण थियो सिकोर्डिनको फोक्सोमा क्यान्सर होइन कि एउटा रूखको बिरूवा उम्रिएको थियो । चिकित्सकले देवदार रूखको पाँच सेन्टिमिटरको बिरूवा फोक्सोमा देखे । वास्तवमा देवदारका साना चुच्चे पातले घोचेर सिकोर्डिनको फोक्सोमा रक्तस्राव भइरहेको रहेछ । त्यही रगत खकारमा आइरहेको थियो । ■

*-युवामञ्च*



# सर्वाधिक मोटे मिनेख

विश्वमा सबैभन्दा गह्रौं मानिसको कीर्तिमान जोन ब्रावर मिनेखको नाममा छ। अमेरिकाका मिनेखको तौल छ सय ३५ किलोसम्म पुगेको थियो। सन् १९७८ मार्चमा मिनेखलाई गाडीमा राखेर सियाटलको युनिभर्सिटी अफ वासिङ्टन मेडिकल सेन्टर लैजाँदा १२ जनाभन्दा बढी दमकलकर्मी आवश्यक पऱ्यो। त्यस सेन्टरमा चिकित्सकले मिनेखको जाँच गर्दा उनको शरीरका तन्तुमा धेरै नै तरल पदार्थ जम्मा भएर तौल बढेको पत्ता लगाएका थिए।

अस्पताल बसाइ अवधिमा चिकित्सकले दैनिक १२ सय क्यालोरी आहारा मात्र उनलाई खान दिएका थिए। त्यहाँ दुई वर्षको अवधिमा मिनेखको तौल चार सय १० किलो घट्यो। शरीरको धेरै तौल घट्नमा समेत यो एक कीर्तिमान नै हो। दुःखको कुरा त के भने अस्पतालबाट बिदा भएर घर फर्केपछि मिनेखको तौल फेरि बढ्न सुरु भयो र सन् १९८३ सेप्टेम्बरमा उनको निधन भयो। मृत्यु हुँदा उनी करिब तीन सय ६२ किलोका थिए।



# हाम्रा पुर्खाले तामाका भाँडा किन प्रयोग गर्दथे ?

तामाले अनावश्यक ब्याक्टेरिया र भाइरसलाई मार्दछ। प्राचीन भारतवर्षमा भाइरस र ब्याक्टेरिया मार्नका लागि ताल, तलैया, इनार, नदीमा तामाको पैसा फ्याँक्ने गरिन्थ्यो। आयुर्वेदले पिउने पानी तामाको भाँडामा भण्डारण गर्न सिफारिस गरेको छ।

**त्यसरी तामाको भाँडामा राखिएको पानीले निम्न लाभ मिल्छ :**

- भाइरस र ब्याक्टेरिया मर्छन्
- मस्तिष्कमा ताजगी आउँछ।
- थाइराइड ग्रन्थीको क्रिया उत्प्रेरित हुन्छ।
- बाथको पीडा कम गर्न मद्दत पुग्छ।
- छालाको स्वास्थ्यमा सुधार आउँछ।
- बुढ्यौलीका लक्षण सुस्त पर्छन्।
- रक्तअल्पता हटाउन मद्दत पुग्छ।
- क्यान्सर र मुटु रोगको जोखिम कम हुन्छ। ■

*-युवामञ्च*

आफ्नो जीवनको सुरुका दिनमा नै मिनेखको अस्वाभाविक तौल बढ्न सुरु भएको थियो। १२ वर्षको उमेरमै उनी एक सय ३३ किलोका थिए र उनको तौल निरन्तर बढिरह्यो तर उनको मोटोपनाले उनलाई सामान्य जीवन जिउनबाट टाढा राख्न सकेन। उनले एक ट्याक्सी कम्पनी खोले र वासिङ्टनको बेनब्रिज आइल्यान्डमा रहेको आफ्नो घर क्षेत्रमा एक चालकका रूपमा कम गर्न थाले।

आफ्नो अस्वाभाविक तौलका अतिरिक्त मिनेखले अर्को अचम्मको कीर्तिमान पनि राखेका छन्। सन् १९७८ मा जब उनले मोटोपनामा विश्व कीर्तिमा बनाए, जेनेट नामकी महिलासँग विवाह गरेर अर्को कीर्तिमानसमेत आफ्नो नाममा लेखाए। जुन कीर्तिमान थियो, श्रीमान् श्रीमतीबीच सर्वाधिक धेरै शारीरिक तौलको भिन्नता। एकातिर मिनेख छ सय ३५ किलोका थिए भने उनी श्रीमती मात्र ५० किलोकी थिइन्।

मिनेख दम्पतीबाट दुई बच्चा भएका थिए। ■

*-बोमबहादुर रायमाझी*



# ब्यासीहरूको 'कुञ्जा' संस्कृति

दार्चुला जिल्लाको उत्तरमा अवस्थित व्यास हिमालको काख र महाकाली नदीले बनाएको उपत्यकामा रहेको व्यास गाउँका बासिन्दालाई व्यासी भनिन्छ। विश्वकै महान् ग्रन्थ वेदका रचयिता कृष्ण द्वैपायन महर्षि वेदव्यासले यो हिमालमा बसेर ध्यान, तप, व्रत गरेकाले हिमालको नाम नै व्यास रहेको तथा त्यस क्षेत्रमा बसोबास गर्नेहरू व्यासी कहलाउन थालेको विश्वास गरिन्छ, यिनीहरूलाई सौका पनि भनिन्छ।

दाचुर्लाका छाङ्रु, टिङ्कर, रपाङ, दुम्लिङ (दुगलिङ) र फुलचिम, राङ्थल, स्याङ्काङ क्षेत्रमा व्यासीको बाक्लो बसोबास छ। जिल्ला सदरमुकाम खलङ्गामा पनि केही व्यासीको बसोबास छ। भारतको अल्मोडा, चमोली, उत्तरकाशी जिल्लाका हिमाली र पहाडी क्षेत्रमा पनि व्यासी/सौकाहरूको बसोबास देखिन्छ। उतैबाट यिनीहरू नेपाल प्रवेश गरेका र यिनीहरू मङ्गोल प्रजातिमा पर्ने केही नेपालीलगायत भारतीय लेखकले अनुमान गरेका छन् तर यिनीहरूमा प्रचलित थर, पूजा विधि, संस्कृति, मुखाकृति, आँखा हेर्दा व्यासीहरू मङ्गोल सामाजिक-सांस्कृतिक अन्तर्क्रियाको प्रभावमा परेका खस हुन सक्ने अनुमान अन्य लेखकको छ।

यिनीहरूले आफूलाई रँ (रङ) जाति बताउने गरेको राष्ट्रिय जनजाति विकास समितिद्वारा प्रकाशित पुस्तिकामा उल्लेख छ। सौकाहरूमा प्रचलित रोतवाल, लाला, तिङ्करी, कल्याल, बुढाथोकी, भण्डारी, जुद्दारी, गर्ब्याल, बुद्धियाल र गुञ्याल जस्ता थरले यिनीहरू हिन्दु हुन् भन्ने प्रमाण दिन्छ तर घरअगाडि राखिने झण्डा बौद्ध आकार प्रकारका देखिन्छन्।

पुरानो पुस्तामा दशैं तिहार मनाउने प्रचलन थिएन तर दार्चुला सदरमुकातिर बस्ने यिनीहरूले दीपावली गर्ने र भौलो खेल्ने गरेका स्थानीय जानकार बताउँछन्। यिनीहरूमा मूर्ति पूजा हुँदैन। मन्दिरमा मूर्ति देखिँदैन तर ढुङ्गालाई देवता मानेर पूजा गर्छन् जसलाई कलिङ भनिन्छ। शुभकार्यमा सेता वस्त्र वा ध्वजा/खादा र भेडाको रौं चढाउँछन् भने अशुभ कार्यमा कालो वस्त्र प्रयोग गरिन्छ।

शुभकार्यमा उवा (हिमाली क्षेत्रमा पाइने गहुँजस्तो अन्न) बाट बनाइने दलाङ (पानीमा सातु मुछेर बनाइने डल्ला) प्रसाद चढाउनु पर्छ। साथै जाँड (बरछ्याङ) अनिवार्य हुन्छ। उवा/जौ पवित्र अन्न मानिने भएकाले यिनीहरू जौको अक्षता लगाउँछन्। यसैबाट पितृ र देवताको पूजा गरिन्छ। छाङ्रुका स्थानीयले गवला (नयाँ वर्ष) पर्व मुख्य चाडका रूपमा मनाउँछन्।

पुराना देवताले कान कम सुन्ने किंवदन्ती अनुसार गवला पर्वमा व्यासीले थाल र झ्याली बजाउने गर्छन्। शान्ति कायम होस्, भगवान्ले सबैको रक्षा गरुन् भन्ने उद्देश्यले देउसीभैलो खेलेर यो पर्व मनाउने गरिन्छ। मन्दिरमा बोकाको बलि दिइन्छ र त्यसको पेट चिरेर कलेजो हेरी शुभ र अशुभ साइत पत्ता लगाउन सकिने विश्वास गर्छन्। विभिन्न हिमाल, पहाडको प्रतीकका रूपमा 'सरसौ धुर्बुछी' स्थापना गरी पूजा गर्ने चलन छ।

व्यास, नमजुङ, अपि हिमाल (अपि दाङ), नम्पा, छिरिङ छेडा, द्विसिगोम्बु आदिको पूजा गरिने कुरा डा. हरिशचन्द्र भट्टले उल्लेख गरेका छन्। उनका अनुसार यसरी पूजा गर्दा फरक फरक गाउँलेले फरक फरक हिमालको पूजा गर्ने गर्दछन्। प्रकृति पूजक यिनीहरूले हिमाल, पहाड, पानी, रुख, ढुङ्गा, झरना, माटो, अन्न, पशु आदिको पूजा गर्छन्।

राप्लाका सौका/व्यासीले कुल देवताका रूपमा नमजुङको पूजा गर्ने देखिन्छ। जसलाई उनीहरू बोन्पो/बोन धर्मका विशिष्ट देवता मान्दछन्। यिनीहरूको रहनसहन बोन र बुद्ध तथा हिन्दु धर्मसँग मिश्रित छ। द्यौला पर्व सबैतिरका व्यासी/सौकाले धुमधामसँग मनाउँछन्। यस जातिमा किर्जीदाम, धवला, सिकब्जे चाँड, मिलोथेमो किपाङ पर्व, नमजुङ बढानी र व्यासऋषि जस्ता चाडपर्व प्रचलित छ। झारफुक लामीझाँक्रीलाई प्राथमिक स्वास्थ्य सेवाका रूपमा पनि लिन्छन्। मानिस बिरामी परे उसो धाहदे (वैद्यबा) कहाँ जाने र उनैले औषधि दिने चलन छ तर अहिले आधुनिक उपचार सेवाको प्रभाव बढ्दो छ।

यिनीहरूको मातृभाषा (सौका भाषा) निकै समृद्ध छ। सौका भाषामा १२ औं शताब्दीतिर स्थानीय गुफा तथा



ढुङ्गामा लेखिएका पाठ्सामग्री पाइएका छन् । वर्ण भने देवनागरी नै हो । सौका भाषा भोट बर्मेली परिवारमा पर्ने र मगर भाषासँग केही हदसम्म मिल्ने भाषाशास्त्रीले बताएका छन् । २०७८ सालको जनगणना अनुसार व्यासीको जनसङ्ख्या पाँच हजार ७१८ छ ।

बसाइँसराइ व्यासी/सौकाहरूको संस्कृति नै हो । व्यासी/सौकाहरू वर्षमा दुई पटक बसाइँसराइ गर्छन् । जसलाई उनीहरू 'कुञ्जा' सर्ने भन्छन् तर सदरमुकातिर बसेका यिनीहरू स्थायी रूपले नै बसोबास गर्न थालेका छन् । हिमाली क्षेत्रमा चिसो बढेपछि कोही जिल्ला सदरमुकाम खलङ्गा र केही भारतको पिथौरागढ, धारचुलातिर जान्छन् । यिनीहरूको आफ्नै भूमि, भूभाग तथा भाषा, परम्परागत संस्था, प्रथाजनित कानुन अभ्यासमा भए पनि ती क्रमशः हराउँदै छन् ।

व्यासी/सौकाको मुख्य पेशा व्यापार, कृषि तथा पशुपालन हो । उवा र नप्पल, जौ, आलु, फापर मुख्य खेती हुन् । उपत्यका र नदी किनारमा धान खेती पनि गर्छन् । व्यापारका लागि मुख्यतः चीनको स्वशासित क्षेत्र तिब्बत, ताक्लाकोट तथा नेपालका विभिन्न शहर बस्ती र भारतको धारचुलातिर यिनीहरू निर्भर छन् । च्याङ्ग्रा, चौंरी, भेडा, बाख्रा, घोडा, खच्चर पाल्ने यिनीहरूले कतिपय जनावरलाई ढुवानीको साधनका रूपमा पनि प्रयोग गर्छन् ।

नेपालबाट जडीबुटी र तयारी खाद्यान्न तिब्बत लैजाने र उताबाट नुन, कपडा, कम्बल, जुत्ता, ऊन, व्यापारिक सामान ल्याउने गर्छन् । तिब्बतबाट च्याङ्ग्रा ल्याएर नेपालका भित्री भागसम्म पुऱ्याएर बेच्ने गरेका छन् । आर्थिक रूपमा यिनीहरू सम्पन्न देखिन्छन् । महिलाले गलैंचा, मोजा, चुटका, पङ्खी (पाछ्यौरी/सल) गलबन्दी, टोपी बुन्ने, कपडाका जुत्ता बनाउने र बेच्ने गर्दछन् । महिलाले मोती, मुगा, पैसाको माला, पोते, चुरा र चाँदी वा सिल्भरको काँडे बाला लगाउँछन् ।

कपडाको जुत्ता (बब्बै), डोचा, बख्खु, पटुका लगाउँछन् । महिलाले टाउकोबाट पछाडि लर्काएर पछ्यौरी (च्युक्ति) लगाउँछन् । महिलामा च्युङ्वाला पहिरन लोकप्रिय छ । अविवाहित महिलाले झगुला वा गाग्री तथा कम्मरबन्द ज्युज्याङ लगाउँछन् ।

पुरुषले ऊनको टोपी लगाउँछन् । लामो जामा, कम्मरमा ज्युज्याङ अर्थात् कमरबन्द, टाउकामा बेल्ठूलो (फेटा) कम्मरभन्दा तल मैजु (सुरुवाल) र खुट्टामा बाँखै (ऊनीको जुत्ता) लगाउने चलन छ । यिनीहरू कानमा कुण्डल र हातमा कडा (बाला) लगाउँछन् । पोशाक प्रायः ऊनबाट बनाइएका हुन्छन् । ■

*-त्रिभुवनचन्द्र वाग्ले*

# रेडियम गर्ल्स



एक शताब्दीपहिले अँध्यारोमा चम्किने घडीहरू अत्यन्त सम्मोहक अपूर्व वस्तु थिए। विशेष खालको चम्किलो रङले ढाकिएको घडीको 'डायल' चम्किरहन्थ्यो र त्यसलाई सौर्य प्रकाशले 'चार्ज' गर्नु आवश्यक थिएन। यो सब जादु जस्तो थियो।

यी घडीको उत्पादन गर्ने एक प्रथम उद्योग सन् १९१६ मा अमेरिकाको न्युजर्जीमा सञ्चालनमा आयो। यस उद्योगले ७० जना महिलालाई काममा राख्यो, अमेरिकामा यस्ता कैयौँ उद्योगमा काममा लगाइएका हजारौँ महिलामध्ये यो पहिलो समूह थियो। त्यतिबेला यसलाई एउटा राम्रो ज्याला पाइने आकर्षक जागिर मानियो।

सानो 'डायल' मा रङ लगाउनु पर्ने मिहिन कामका लागि महिलालाई आफ्ना ओठद्वारा 'ब्रस' लाई तिखो पार्न निर्देशन थियो तर उनीहरू अनभिज्ञ थिए। मुस्किलले २० वर्षपहिले मात्र पत्ता लगाइएको एक रेडियोधर्मी तत्त्व रेडियम रङमा मिसाइएका कारणले गर्दा घडी चम्किने हो। रेडियमका सबै विशेषता अझैसम्म बुझ्न सकिएको थिएन। ती महिलाले हरेकपटक जसो ओठमा 'ब्रस' ल्याउँदा रेडियमको थोरै मात्रा अन्जानमा निल्दथे।

घडीको 'डायल' रेडियम रङले तयार पार्नु महिलाका लागि आकर्षक जागिर त छँदै थियो, उनीहरूले तीन गुणा बढी ज्याला पनि पाउँथे। रेडियम रङ सुरक्षित रहेको बताइयो तर यो झुटो थियो। यतिसम्म कि रेडियम खोज गर्ने मेरी क्युरीसमेत प्रयोगशालामा

रेडियममा परीक्षण गर्दा विकिरणले जलेकी थिइन् । रेडियम विषाक्तताले धेरै मानिसको मृत्यु भएको थियो । यही कारण रेडियम कम्पनीमा काम गर्ने अधिकांश मानिसले प्रयोगशालामा रेडियममा काम गर्दा 'लेड एप्रोन' लगाउने र हात्ती दाँतले बनाइएका चिम्टा प्रयोग गर्दथे तर 'डायल' पेन्टरहरूलाई यस्तो खालको सुरक्षा व्यवस्था गरिएको थिएन र उनीहरूलाई जोखिमको जानकारी पनि दिइएन ।

ती महिला 'रेडियम गर्ल्स' कहलिए ।

नोबेल पुरस्कार विजेता मेरी क्युरी र उनका पति पियरे क्युरीद्वारा सन् १८९८ मा रेडियम खोज गरिएको थियो । खोज गरिएलगत्तै रेडियमलाई क्यान्सर उपचारको एक माध्यम बनाइयो ।

'द रेडियम गर्ल्स' की लेखिका केट मुरले फोन अन्तर्वार्तामा भनिन्, "किनभने यो सफल थियो । यो केही गरी एक सर्वशक्तिशाली स्वास्थ्य 'टनिक' बन्यो । जसरी आज हामी भिटामिन्स खान्छौँ त्यसरी नै खाइन्थ्यो । मानिसहरू यसको शक्तिले मोहित नै भए ।"

**शरीरमा ऊर्जाको कमी भएर बिरामी भएको ठानिएका कुनै पनि समस्यामा रेडियमका उत्पादन प्रयोग गरिन्थ्यो– थकानको आमसमस्यादेखि नपुंशकतासम्म ।**

यो एक उन्माद नै बन्यो । दैनिक प्रयोगमा आउने कैयौँ उत्पादनमा रेडियम एक मिसाइने वस्तु बन्न पुग्यो । मन्जनदेखि सौन्दर्य प्रसाधन तथा खाद्यवस्तु र पेय पदार्थमा समेत रेडियम हालिन थालियो । यस्तै एक उत्पादन थियो 'रेडिथोर' । थोरै मात्रामा रेडिमय मिसाइएको 'डिस्टिल वाटर' थियो 'रेडिथोर' । यसको प्रचार यसरी गरियो : 'जिउँदै मरेकाको एक उपचार' र 'अनन्त प्रशनन्ता' । यसले वात रोगदेखि सन्धिशोधसम्म कैयौँ रोगको सटिक उपचार गर्ने दाबी गरिएको थियो ।

जर्जटाउन विश्वविद्यालयमा कार्यरत एक विकिरण विशेषज्ञ तथा 'स्ट्रेन्ज ग्लो : द स्टोरी अफ रेडिएसन' का लेखक टिमोथी योर्गेन्सनले भनेका छन्, "रेडियोधर्मिताले ऊर्जा निस्कन्छ भन्ने जानकारी मानिससँग थियो । उनीहरूले वास्ता गरेनन् त्यस्तो केही ऊर्जा आफ्नो शरीरमा हाल्दा त्यो कत्ति पो हानिकारक होला र । शरीरमा ऊर्जाको कमी भएर बिरामी भएको ठानिएका कुनै पनि समस्यामा रेडियमका उत्पादन प्रयोग गरिन्थ्यो– थकानको आमसमस्यादेखि नपुंशकतासम्म ।"








रोगको उपचारमा रामवाण हुनु त बेग्लै कुरा रेडियम एक अत्यन्त घातक तत्त्व थियो। एक प्रयोगकर्ता अमेरिकी धनाढ्य तथा खेलाडी एबेन बायर्सले हरेक दिन एक सिसी 'रेडिथोर' वर्षौं पिए र सन् १९३२ मा त्यसैले उनको मृत्यु भयो। उनको मृत्यु सम्बन्धमा वाल स्ट्रिट जर्नलमा प्रकाशित सामग्रीमा लेखिएको थियो, "रेडियम पानीले तबसम्म राम्रो काम गर्‍यो जबसम्म उनको बङ्गारा खुस्किएर झरेन।"

## एक मन्द विष

"जब निलिन्छ रेडियम विशेष रूपमा शरीरलाई खतरनाक हुन्छ। रासायनिक रूपमा यसले क्याल्सियमसरह व्यवहार देखाउँछ," भन्छन्, योर्गेन्सन शरीरले हड्डी बनाउन क्याल्सियम प्रयोग गर्छ, निलिएको रेडियमलाई शरीरले गल्तीले क्याल्सियम ठान्छ र हड्डीमा गएर मिसिन्छ। यस कारण रेडियम निल्नुको मुख्य स्वास्थ्य जोखिम भनेको रेडियमले हुने अस्थिक्षय (बोन नेक्रोसिस) र हड्डीको क्यान्सर हो। यो अवस्था कति चाँडै विकसित हुन्छ भन्ने कुरा रेडियमको मात्रामा भर पर्छ तर 'रेडियम गर्ल्स' प्रभावित भएको उच्च मात्रा जति हो भने त केही वर्ष मात्र लाग्छ यस्तो अवस्था विकसित हुन।

आफ्नो ओठमा रेडियमयुक्त रङमा चोपिएको 'ब्रस' लगाउँदा 'रेडियम गर्ल्स' ठूलो जोखिममा थिए– उनीहरू यस्तो जोखिम लिन किन तयार भए ? किनभने 'ब्रस' को टुप्पो तिखो बनाउन यो सजिलो उपाय थियो। तिखो पारिएको 'ब्रस' ले घडीका साना अक्षर स्पष्ट र आकर्षक रूपमा लेख्न सकिन्थ्यो।

तर 'रेडियम गर्ल्स' ले आँखा चिम्लेर यो जोखिम उठाएका चाहिँ होइनन्। उनीहरूले "यो

रङ हामीलाई खतरनाक त छैन ?" भनी प्रश्न सोधेका थिए तर कम्पनीका मेनेजरले रङ सुरक्षित रहेको बताए। त्यतिबेला कम्पनीको अस्तित्व रेडियमयुक्त रङमा निर्भर रहेकाले मेनेजरको यस्तो जवाफ आउनु स्पष्ट नै थियो।

जतिबेला चम्किने घडी सन् १९२० को दशकमा व्यापक प्रचलनमा आए, विश्व पहिले नै रेडियोधर्मिताको जोखिमका बारेमा सचेत भइसकेको थियो तर विकिरण विषाक्तताले तत्काल असर नदेखाउने भएकाले कुनै एक श्रमिकमा लक्षण विकास हुन वर्षौं लाग्यो।

**मृत्यु प्रमाणपत्रमा गल्तीले भिरिङ्गीका कारण उनको मृत्यु भएको उल्लेख गरियो तर यथार्थमा उनी 'रेडियम जँ' समस्याबाट ग्रसित थिइन्।**



मुरका अनुसार हामीले रेडियम खतरनाक हो भन्ने थाहा पाएको एक शताब्दी भइसकेको छ र यसको उच्च मात्राले मानव तन्तु नष्ट गर्दछ तर यसले रातो रक्तकोषको मात्रा बढ्न भूमिका खेलेर स्वास्थ्य सुधारिएको भ्रम दिन्छ तर दीर्घकालीन रूपमा यसले मन्द विषको काम गर्दछ।

वास्तवमा 'रेडियम गर्ल्स' नौलो चामत्कारिक औषधिमा काम गरिरहेकाले आफूहरू स्वस्थ भइरहेको विश्वासमा थिए। त्यतिबेला त्यो विश्वको सर्वाधिक महँगो वस्तु थियो र आजको मुद्रासँग तुलना गर्दा प्रतिग्रामको २२ लाख अमेरिकी डलर पर्दथ्यो। यस नोकरीको आकर्षण बढ्दै जाँदा काम गर्ने महिलालाई उनीहरूको शहरको टेलिफोन डाइरेक्टरीमा समेत नाम समावेश गरी कलाकारका रूपमा सूचीबद्ध गरिएको थियो। यो काम कतिसम्म आकर्षक भयो भने उनीहरू आफ्ना दिदीबहिनी र साथीहरूलाई समेत यसमा लाग्न प्रोत्साहित गर्न थालेका थिए।

जब रङको मिश्रण बनाइन्थ्यो त्यसबाट खतरनाक रेडियोधर्मी धुलो वायुमा फैलिएर महिलाको कपाल र लुगामा पुग्ने गर्थ्यो, यो एक भयङ्कर दुष्प्रभाव थियो। त्यतिबेलाका महिलालाई यस दुष्प्रभावको कुनै ज्ञान थिएन। बरु उनीहरू यसलाई मन पराउँथे र कारखानामा काम गर्दा आफूले राम्रो लुगा लगाउने गरेको कुरा गर्दथे।

## रेडियम बङ्गारा

सन् १९२० को दशकको आरम्भिक दिनमा केही 'रेडियम गर्ल्स' मा लक्षण विकास हुन थाल्यो। थकान लाग्ने र दाँत चिलाउने लक्षण सुरुमा देखियो। यसबाट पहिलो मृत्यु सन् १९२२ मा भयो। लगातार एक वर्षसम्म पीडा सहन गरेर २२ वर्षकी मोली मागियाको मृत्यु भएको थियो। यद्यपि मृत्यु प्रमाणपत्रमा गल्तीले भिरिङ्गीका कारण उनको मृत्यु भएको उल्लेख गरियो तर यथार्थमा उनी 'रेडियम जँ' समस्याबाट ग्रसित थिइन्। उनको तल्लो





**न्युजर्जीको मूल उद्योगमा काम गर्ने एक श्रमिक ग्रेसी फ्रायरले सन् १९२५ मा मुद्दा हाल्ने निर्णय गरिन् तर आफूलाई सहयोग गर्न चाहने वकिल खोज्न नै उनलाई दुई वर्ष लाग्यो ।**

बङ्गारा यतिसम्म खिइसकेको थियो कि चिकित्सकले सामान्य प्रयासबाट त्यसलाई बाहिर निकालेका थिए। रेडियमले उनको बङ्गारा छियाछिया परेर प्वालैप्वाल पार्दा पनि उनी केही समय जीवित रहिन् ।

तैपनि त्यस कम्पनीको स्वामित्व भएको युनाइटेड स्टेट रेडियम कर्पोरेसनलाई यस विषयमा कुनै कारबाही अगाडि बढाउन दुई वर्ष लाग्यो। त्यो पनि श्रमिकको स्वास्थ्यका बारेमा नभएर कम्पनीको घट्दो व्यापारमा बढी केन्द्रित हुने गरी स्वतन्त्र छानबिन आयोग गठन गरिएको थियो ।

न्युजर्जीको मूल उद्योगमा काम गर्ने एक श्रमिक ग्रेसी फ्रायरले सन् १९२५ मा मुद्दा हाल्ने निर्णय गरिन् तर आफूलाई सहयोग गर्न चाहने वकिल खोज्न नै उनलाई दुई वर्ष लाग्यो। सन् १९२७ मा उनले अन्ततः आफ्ना चार अन्य सहकर्मीसहित मुद्दा दायर गरिन्। यस कदमले विश्वका समाचारपत्रमा ठूलो महत्त्व पायो ।

सन् १९२८ मा यस मुद्दाको फैसला महिलाको पक्षमा आयो। जुन व्यावसायिक जोखिम कानुन निर्माणमा कोसेढुङ्गा भयो। त्यतिबेलासम्म रेडियमको खतरा सतहमा आइसकेको थियो। ओठले 'ब्रस' तिखो पार्ने विधि बन्द गरियो र श्रमिकलाई सुरक्षा सामग्री दिइन थालियो। मुद्दा हाल्ने महिला बढ्न थाले र रेडियम कम्पनीहरूले कैयौँ पटक अपिल गरे तर सन् १९३९ मा अमेरिकाको सर्वोच्च अदालतले अन्तिम अपिल खारेज गरिदियो ।

रेडियम विकिरणको प्रभावमा परेर पनि बाँचेका श्रमिकले क्षतिपूर्ति पाए तथा मृत्यु प्रमाणपत्रमा मृत्युको सही कारण उल्लेख गरिन थालियो। त्यसपछि रेडियम रङलाई समेत प्रयोगमा ल्याउन छाडियो र सन् १९६८ यता घडीमा रेडियम रङ प्रयोग गर्न बन्द गरियो ।

रेडियम निलेर कति महिलाको स्वास्थ्यमा समस्या आयो स्पष्ट तथ्याङ्क छैन तर हजारौँ महिला हुन सक्छन्। यसको प्रभावले जीवनको उत्तरार्द्धमा क्यान्सर जस्तो प्राणघातक रोगसमेत लाग्न सक्ने भएकाले प्रभावित महिलाको सङ्ख्या यत्तिकै अनुमान गर्न सकिन्न ।

रेडियमको अर्धआयु नै १६ सय वर्ष हुने भएकाले यो एक पटक महिलाको शरीरमा पुग्नुको अर्थ सधैँका लागि त्यहाँ छ भनी बुझ्नु पर्छ। ■

*-उमेश ओझाद्वारा सिएनएन र अन्य स्रोतबाट अनुवादित र सम्पादित ।*


RIPLEY'S Believe It or Not!
युरोपियन कमन फ्रगको पोथी भ्यागुताले नजिक आइरहेको भाले भ्यागुताबाट जोगिन मरेको नक्कल गर्दछ ।
...त्यो अझै यतै छ ?
SLAP
सन् 2020 मा ब्राजिलको एक हुन्डाई 'शोरूम' ले टक्सन प्राइम नामको भुस्याहा कुकुरलाई 'सेल्स-डग' का रूपमा काममा राखेको थियो ।
तापक्रमले गोहीको लिङ्ग निर्धारण गर्दछ । अण्डामा तापक्रम बढी भए सबै भाले र कम भए सबै पोथी जन्मन्छन् ।
CASTANO
www.gocomics.com www.ripleys.com ©2024 Ripley Entertainment Inc.



# मान्छे नै चिम्पान्जी बन्यो

**बाँदर जातिमा चिम्पान्जी धेरै नै समझदार हुन्छ । यो मानिससँग पनि चाँडै घुलमिल हुने र भनिएका कुरा पनि केही सिक्ने गर्छ । सानै छँदा मानिससँग मात्र सम्पर्क हुने गरी चिम्पान्जीलाई हुर्काइयो भने के होला ?, के त्यसले मानिसका धेरै कुरा सिक्ने छ ?, मानिससरह व्यावहारिक अन्तर्क्रिया गर्न सक्ने छ वा सम्पूर्णतया नैसर्गिक गुण लिएरै हुर्कने छ ?**



पशुहरूमा चिम्पान्जीको बौद्धिकतासँग मानिस परिचत भएको धेरै समय भएको छ । अन्य पशुको तुलनामा चिम्पान्जी धेरै नै बुद्धिमान हुन्छन् । उनीहरू आफूलाई आवश्यक औजार बनाउन सक्छन्, जटिल ध्वनिद्वारा उनीहरू आपसमा संवाद गर्न सक्छन् तथा आफूलाई आइपर्ने कतिपय समस्या समाधान गर्न सक्छन् । वैज्ञानिकहरूले चिम्पान्जीलाई साङ्केतिक भाषामा दोहोरो वार्ता गर्न सिकाउनमा समेत सफलता पाएका छन् ।

वैज्ञानिक अनुन्धानबाट के देखिएको छ भने लगभग ४० लाख वर्षपहिले मानिस र चिम्पान्जीका पुर्खा छुट्टिएका हुन् । जैविक अध्ययनबाट समेत आधुनिक मानव होमो सेपियन्स र चिम्पान्जीमा १.२३ प्रतिशत मात्र जिन भिन्न रहेको देखिएको छ ।

चिम्पान्जी सामाजिक प्राणी हो तथा सहानुभूति, परोपकारिता, आत्म चेतना, समस्या समाधानमा सहयोग, उदाहरण र अनुभवद्वारा सिक्ने क्षमता यिनमा हुन्छ ।

चिम्पान्जीमा यस्तै खालका विशेषता देखेर एक पटक दुई जना मनोवैज्ञानिकले बच्चा चिम्पान्जीलाई मानिसको बच्चासँगै हुर्काएर चिम्पान्जीलाई मानिसका व्यवहार सिकाउने कोसिस गरेका थिए। कुरा सन् १९३० को दशकको हो मनोवैज्ञानिकले स्वयंको बालक डोनाल्डसँगै चिम्पान्जीको बच्चालाई राखेर परीक्षण सुरु गरे। कुरा सोचेको भन्दा ठिकविपरीत भयो। नौ महिना सँगै राख्दा चिम्पान्जीको बच्चाले मानव व्यवहार सिक्नु त कता हो कता उल्टै डोनाल्ड चिम्पान्जीको जस्तो व्यवहार गर्न थालेको थियो। डोनाल्डले नै चिम्पान्जीसरह व्यवहार देखाउन थालेपछि मनोवैज्ञानिकले परीक्षण रोकेका थिए।

बाल्यकालमै चिम्पान्जीसँग सङ्गत भएर अस्वाभाविक व्यवहार देखाउन थालेका डोनाल्डको मानसिक अवस्था पछिसम्म राम्रो भएन। एकोहोरे र अन्तर्मुखी उनले ४३ वर्षको उमेरमा आत्महत्या गरे तर डोनाल्डसँग छुट्टिएर मर्माहत भएको चिम्पान्जी एक वर्षपछि नै मरेको थियो।

आफ्नो छोरा डोनाल्ड केलोग १० महिनाको हुँदा मनोवैज्ञानिक विथ्रोप र लुएला केलोगले फ्लोरिडाको आफ्नो अस्थायी घरमा राखेर सात






महिनाको पोथी चिम्पान्जी गुआसँगै उनलाई हुर्काउने निर्णय गरेका थिए। विनथ्रोपले बाँदरलाई मानव बनाउने बारेमा लेखेका थिए र आफ्नो छोराको जन्मलाई उनले त्यसलाई प्रमाणित गर्न सकिने अवसरका रूपमा लिए।

छोरालाई चिम्पान्जीसँगै राखेर केलोग दम्पतीले दुवैलाई समान व्यवहार गरे। उनीहरूलाई एकै खालको लुगा लगाइन्थ्यो, एकै समयमा खान दिइन्थ्यो, एकै खालका खेलौना खेल्न दिइन्थ्यो र एकै ठाउँमा उही

समयमा सुताइन्थ्यो। परीक्षण जसै जसै अगाडि बढ्दै गयो डोनाल्डले गुआको नक्कल गर्न थाले। डोनाल्डले चिम्पान्जी जस्तै आवाज निकाल्ने र चिम्पान्जी जसरी हिँड्न सिके। विस्तारै डोनाल्ड जङ्गली बच्चामा परिणत हुन थाले। गुआले डोनाल्डको नक्कल गर्ने छ र उनीबाट सिक्ने छ भन्ने अनुमान थियो तर ठिक विपरीत हुन थालेपछि परीक्षण बन्द गरियो।

यदि आफ्नो अर्को सन्तानसरह मानेर चिम्पान्जीलाई बच्चासँगै हुर्काइयो भने उसको विकास अवरुद्ध हुनुपर्ने थियो। डोनाल्डले समेत निकै महत्त्वपूर्ण समयमा बाँदरबाट होइन कि आफ्ना आमाबुवा, भाइबहिनी र सहपाठीबाट बोल्न सिक्नु पर्ने हो तर त्यसो केही पनि भएन। चिम्पान्जीले कहिल्यै बोल्न जानेन। बरु डोनाल्डमा धेरै ढिलो बोली फुट्यो। परीक्षणको नतिजा नै अनुमानविपरीत आएपछि डोनाल्डलाई इन्डियाना फर्काइयो र चिम्पान्जीलाई बाँदर पालन केन्द्रमा। जहाँ निमोनियाले सङ्क्रमित भएर चिम्पान्जीको मृत्यु भएको थियो। ■

*-युवामञ्च*



## मेसीका कारण ज्यान बच्यो

अतिवादी समूह हमासद्वारा गत अक्टोबरमा इजरायलमाथि अप्रत्यासित आक्रमण गरी सयौं मानिसलाई बन्धक बनाइयो तर ९० वर्षीय अर्जेन्टिनी महिला लियोनेल मेसीका कारणले अपहरणमा पर्नबाट जोगिइन्। हमासका लडाकुले ती महिलालाई नियन्त्रणमा लिएका थिए तर मेसीका कारणले छाडिदिए। ती महिलाले पछि प्रतिक्रिया दिँदा जानकारी दिइन्, "मैले भनें मेसी जुन देशका हुन् म पनि त्यही देशको हुँ...।"



मैले उनलाई सोधें, "के तिमी फुटबल हेर्छौ ?"

उनले भने, "किन नहेर्नु।"

"मैले मेसीको नाम लिँदा उनी छक्क परेका थिए।"

उनले पनि मेसीलाई मन पराउँदा रहेछन्। "त्यसपछि उनले आफ्नो बन्दुक मलाई समात्न भने र मेरो काँधमा हात राखे। उनले मलाई शान्तिको सङ्केत गर्न भने र फोटो खिचे।" ■

*-युवामञ्च*

# महान् गणितज्ञ
# रामानुजन



■ रतन भण्डारी



दक्षिण एसियाले प्राचीन कालदेखि नै महान् गणितज्ञहरूलाई जन्म दिएको छ। महान् गणितज्ञ आर्य भट्ट, भाष्कर (भाष्कराचार्य) र ब्रह्मगुप्त यहीँ जन्मेका थिए। विश्वमा दशमलव प्रणाली र शून्य आविष्कार यसै भूखण्डमा भएको थियो। शून्यले भाग गरेको कुनै पनि सङ्ख्या अनन्त हो तथा कुनै सङ्ख्या र अनन्तताको योगफल पनि अनन्त नै हो भनी स्वीकार गर्ने भाष्कराचार्य थिए।

भाष्कराचार्य 'सिद्धान्त शिरोमणि' महान् ग्रन्थका रचनाकार हुन्। शास्त्रीय युगका पहिलो गणितज्ञ–खगोलशास्त्री पनि हुन् आर्य भट्ट। उनले 'स्थान मूल्य प्रणाली' प्रतिपादन गरेका थिए। नौ ग्रहको स्थिति पत्ता लगाउने आर्य भट्ट नै थिए। जसको अध्ययनबाट ग्रहहरूले सूर्यको परिक्रमा गर्ने र वर्षमा दिनहरूको सङ्ख्या ३६५ रहेको तथ्य उनैले बाहिर ल्याए।

१९ औँ शताब्दीमा आएर दक्षिण भारतमा त्यस्तै अर्को गणितज्ञले जन्म लिए, जसको नाम थियो रामानुजन। महान् गणितज्ञ रामानुजनले आफूमा अन्तर्निहित गणितीय ज्ञानका कारण विश्वलाई चकित पारेका थिए। असाधारण प्रतिभाका धनी रामानुजनमा गणितको ज्ञान यति असाधारण र गहिरो थियो कि बाल्यकालदेखि नै उनले गणितका धेरै आधारभूत सिद्धान्त व्यावहारिक रूपमा पुष्टि गरेका थिए।

रामानुजनले छ सय ५० भन्दा बढी साध्य अर्थात् प्रमेय (थियरम) लाई विभिन्न विधिद्वारा हल गरे। गणितका क्षेत्रमा सङ्ख्या सिद्धान्तमा हार्डी–रामानुजन–लिटिलवुड वृत्त विधि, सङ्ख्याको विभाजनमा रोजर–रामानुजनको पहिचान, असमानताको बिजगणित, निरन्तर भिन्नहरू, अति ज्यामितीय शृङ्खलाको आंशिक योगफल रामानुजनले गरेका महत्त्वपूर्ण कार्य हुन्।





रामानुजनले १६ वर्षको उमेरमा पाँच हजार सूत्र, प्रमेय (साध्य) र प्रमेय प्रमाणित गरेर भारतका मात्र नभई विदेशी गणितज्ञहरूलाई समेत अचम्मित तुल्याएका थिए ।

## को थिए रामानुजन ?

रामानुजनको वास्तविक नाम श्रीनिवास रामानुजन आयङ्गकर थियो । रामानुजन सन् १८८७ डिसेम्बर २२ मा तमिलनाडुको इरोडमा जन्मेका थिए । उनका पिताको नाम कुप्पुस्वामी श्रीनिवास आयङ्गर र आमाको नाम कोमलताम्मल थियो । रामानुजनका पिताको पैतृक थलो भने तमिलनाडुकै तन्जावुर भए पनि उनी तमिलनाडुकै अर्को शहर कुम्भकोनममा एक जना कपडा व्यापारीको पसलमा काम गर्थे । त्यसैले एक वर्षका रामानुजनलाई उनकी आमाले कुम्भकोनम लगेकी थिइन् ।

दुई वर्षको उमेरमा रामानुजनलाई बिफर सङ्क्रमण भयो । त्यसपछि रामानुजनको परिवार कुम्भकोनमबाट तमिलनाडुकै काँचीपुरम बसाइ सऱ्यो । काँचीपुरममा रामानुजनका मावली हजुरबुवा अदालतका कर्मचारी थिए । सन् १८९२ अक्टोबरमा रामानुजनलाई काँचीपुरमको स्थानीय विद्यालयमा भर्ना गरियो तर मावली



हजुरबुवाको जागिर छुटेपछि रामानुजनको परिवार फेरि कुम्भकोनममा फर्कियो ।

कुम्भकोनममा रामानुजनलाई काङ्गायन स्कुलमा भर्ना गरियो। त्यसै बेला उनका आफ्नै हजुरबुवाको निधन भयो। त्यसपछि रामानुजनलाई पुनः मावली हजुरबुवाकोमा मद्रासमा पठाइयो। रामानुजनलाई मद्रासमै एक स्कुलमा भर्ना गरियो तर उनले उक्त स्कुल मन पराएनन् । स्कुल नै जान चाहेनन् । त्यसपछि रामानुजनलाई फेरि कुम्भकोनममै ल्याइयो ।

कुम्भकोनम आएर काङ्गायन स्कुलमा भर्ना भएका रामानुजनले १० वर्षको उमेरमा जिल्लामा प्रथम भए। त्यसपछि उनी टाउन हायर सेकेन्डरी स्कुलमा भर्ना भए, जहाँ उनले पहिलो पटक औपचारिक गणितको सामना गर्नुपर्‍यो। ११ वर्षको पुग्दा रामानुजनले आफ्नो घरमा डेरा गरी बस्ने कलेजका दुई विद्यार्थीको गणितका सवाल समाधान गरेका थिए। पछि उनलाई एसएल लोनीद्वारा लिखित त्रिकोणमितिसम्बन्धी पुस्तक दिइयो। उनले १३ वर्षको उमेरमा आफ्नै मेहनतले जटिल साध्य (प्रमेय) हरू पत्ता लगाए। गणितमा उनी यति पारङ्गत थिए कि शिक्षकले दिएको आधा समयमै गणितको परीक्षा पूरा गर्थे। १४ वर्षको उमेरमा उनले योग्यताको प्रमाणपत्र प्राप्त गर्दै प्राज्ञिक पुरस्कार प्राप्त गरेका थिए।

सन् १९०२ मा रामानुजनलाई घन समीकरण हल गर्ने तरिका सिकाइयो। त्यसपछि उनले चतुर्थक (क्वार्टिक) समाधान (हल) गर्ने छुट्टै विधि विकास गरे । सन् १९०३ मा १६ वर्षको उमेरमा रामानुजनले एक जना साथीबाट जीपीएस करको 'ए सिनाप्सिस अफ एलमेन्ट्री रिजल्टस् इन प्योर एन्ड एप्लाइड म्याथम्याटिक्स' नामक पुस्तकको प्रतिलिपि प्राप्त गरे। रामानुजनले उक्त पुस्तकको विस्तृत अध्ययन गरे र अर्को वर्ष स्वतन्त्र रूपमा बर्नोली सङ्ख्याहरूको विकास र अनुसन्धान गरे तथा १५ दशमलव स्थानसम्म युलर–मास्चेरोनी स्थिरता गणना गरेका थिए।

सन् १९०४ मा रामानुजनले हाइस्कुल उत्तीर्ण गरे। गणितमा उनको अदभूत क्षमताको कदर गर्दै स्कुलका प्रधानाध्यापक कृष्णस्वामी अय्यरले के. रङ्गनाथ राव पुरस्कार प्रदान गरे। अय्यरले रामानुजनलाई उत्कृष्ट विद्यार्थीका रूपमा चिनाए। त्यसपछि उनले कुम्भकोनमको आर्ट्स कलेजमा उच्च शिक्षा अध्ययनको छात्रवृत्ति पाए। रामानुजनको लगाव केवल गणितमा थियो। त्यसैले उनले अरू विषयमा ध्यानै दिन सकेनन्। सोही कारण उनी अरू विषयमा अनुत्तीर्ण रहे। छात्रवृत्तिको नियमानुसार सबै विषयमा उत्तीर्ण हुनुपर्थ्यो तर रामानुजन सबै विषयमा उत्तीर्ण हुन नसक्दा आफूले पाएको छात्रवृत्तिसमेत गुमाए।

सन् १९०५ मा उनी मद्रास आएर त्यहाँ पचैयप्पा कलेजमा भर्ना भए। त्यहाँ उनी गणितमा उत्तीर्ण भए तर अङ्ग्रेजी, संस्कृतलगायतका विषयमा राम्रो अङ्क ल्याएनन्। रामानुजन सन् १९०६ डिसेम्बरमा 'फेलो अफ आर्ट्स' परीक्षामा असफल रहे। त्यसपछि उनले एफए डिग्रीबिना कलेज छोडे र गणितको स्वतन्त्र अध्ययनमा जुटे। त्यसबीचमा उनले गरिबीको पनि उत्तिकै सामना गरे। सन् १९१० मा २३ वर्षीय रामानुजन र भारतीय गणितीय समाजका संस्थापक वी. रामास्वामी अय्यरबीच भेट भयो। त्यसपछि रामानुजनले मद्रासको गणितीय वृत्तमा छुट्टै पहिचान बनाए। त्यसपछि उनले मद्रास विश्वविद्यालयमा शोधकर्ताको रूपमा काम गरेका थिए।

सन् १९०९ जुलाई १४ मा रामानुजनको विवाह २२ वर्षको उमेरमा १० वर्षीय जानकीसँग भएको थियो। अनमेल विवाहका कारण रामानुजनका पिता विवाह समारोहमा सहभागी भएका थिएनन्। विवाहको तीन वर्षसम्म जानकी आफ्नो मामाघरमा बसेकी थिइन। सन् १९१२ पछि मात्रै रामानुजन र जानकीसँगै बस्न थाले।

विवाहपछि रामानुजनमा हाइड्रोसिलको समस्या



रामानुजनको अनुसन्धानबाट राव प्रभावित भए तर उनले रामानुजनको प्रतिभामा शङ्का गरे । शङ्का निवारणका लागि रावले विभिन्न गणितज्ञसँग पत्राचार गर्नुका साथै रामानुजनको परीक्षासमेत लिएका थिए ।

देखियो । उक्त रोग शल्यक्रियाबाट उपचार गर्न सकिन्थ्यो तर उपचारका लागि उनको परिवारसँग पैसा थिएन । पछि एक जना चिकित्सकले उनको निःशुल्क उपचार गरिदिए ।

सन् १९१० को अन्त्यमा रामानुजन फेरि बिरामी परे । त्यतिबेला उनी आफ्नो स्वास्थ्यबारे निकै चिन्तित थिए । सोही कारण उनले आफ्ना मित्र आर. राधाकृष्ण अय्यरलाई आफ्ना नोटबुक पचाइप्पा कलेजका गणितका प्राध्यापक सिङ्गारावेलु मुदलियार या मद्रास क्रिस्चियन कलेजका ब्रिटिस प्राध्यापक एडवर्ड बी रोसलाई दिनु भनेका थिए तर रामानुजनको रोग बिसेक भयो । त्यसपछि उनले राधाकृष्ण अय्यरबाट आफ्ना नोटबुक फिर्ता मागे । सन् १९१३ मे मा उनी मद्रास विश्वविद्यालयमा शोधकर्ता रहेका थिए ।

## गणितमा संलग्नता

सन् १९१० मा रामानुजनले इन्डियन म्याथम्याटिकल सोसाइटीका 'डेपुटी कलेक्टर' वी. रामास्वामी अय्यरलाई भेटे र राजस्व विभागमा कामका लागि याचना गर्दै आफ्नो गणितको नोटबुक देखाए । रामानुजनको नोटबुकमा रहेका असाधारण गणितीय नतिजा देखेर अय्यर छक्क परे । अय्यरले रामानुजनलाई राजस्व विभागको कनिष्ट पदमा नियुक्त गर्दा उनीभित्रको प्रतिभा मरेर जाने देखे । त्यसैले अय्यरले रामानुजनका बारेमा एउटा पत्र लेखेर आफ्ना गणितज्ञ मित्रहरूकहाँ पठाए । अय्यरका मित्र रामानुजनको कामबाट प्रभावित भए र उनलाई निल्लोरस्थित इन्डियन म्याथम्याटिक सोसाइटीका सचिव आर. रामचन्द्र रावकहाँ पठाए । रामानुजनको अनुसन्धानबाट राव प्रभावित भए तर उनले रामानुजनको प्रतिभामा शङ्का गरे । शङ्का निवारणका लागि रावले विभिन्न गणितज्ञसँग पत्राचार गर्नुका साथै रामानुजनको परीक्षासमेत लिएका थिए ।

अन्ततः उनी रामानुजनको प्रतिभाप्रति विश्वस्त बने । त्यसपछि रावले उनको चाहनाबारे सोधे । रामानुजनले आफूलाई आयआर्जनका लागि काम चाहिएको बताए । त्यसपछि रावले रामानुजनलाई निल्लोरबाट मद्रास पठाए । उनले रावको आर्थिक सहयोगमा आफ्नो अनुसन्धान जारी

राखे । अनि रामानुजनको लेख इन्डियन म्याथम्याटिक सोसाइटीको जर्नलमा प्रकाशित भयो ।

सन् १९१३ मा नारायण अय्यर, रामचन्द्र राव र ई.डब्लु. मिडलमास्टले रामानुजनको काम ब्रिटिस गणितज्ञहरूसमक्ष प्रस्तुत गर्ने प्रयास गरे । युनिभर्सिटी कलेज लन्डनका एम.जे.एम. हिलले रामानुजनका कागजात हेर्दै उनीसँग 'गणितीय क्षमता' भए पनि आवश्यक शैक्षिक पृष्ठभूमि नभएको बताए । हिलले रामानुजनलाई विद्यार्थीका रूपमा लिन मानेनन् । त्यसपछि रामानुजनले साथीहरूको सहयोगमा क्याम्ब्रिज विश्वविद्यालयका प्रमुख गणितज्ञहरूलाई पत्र लेखे । प्रोफेसरहरू एचएफ बेकर र ई.डब्लु. होब्सनले बिनाटिप्पणी रामानुजनका कागजात फिर्ता गरे । त्यसपछि रामानुजनले सन् १९१३ जनवरी १६ मा जीएच हार्डीलाई पत्र लेखे । हार्डीले सुरुमा अज्ञात गणितज्ञबाट आएको गणितका नौ पाने कागजात नक्कली भएको ठाने ।

पछि हार्डीले रामानुजनका कागजात स्वीकारे । सन् १९१३ फेब्रअरी ८ मा हार्डीले पत्र लेख्दै रामानुजनको

## बेलायत बसाइ

रामानुजन सन् १९१४ अप्रिल १४ मा लन्डन पुगे । लन्डनमा उनलाई लिन इ.एच. नेभिल आएका थिए । लन्डन पुगेको लगत्तै रामानुजनले लिटिलवुड र हार्डीसँग काम सुरु गरे । बेलायतमा रामानुजनले लगभग पाँच वर्ष क्याम्ब्रिजमा हार्डी र लिटिलवुडसँग सहकार्य गरे । आफ्ना अध्ययनका निष्कर्ष प्रकाशित गरे । हार्डी र रामानुजनको व्यक्तित्व एकदमै विपरीत थियो । उनीहरूबीच काम गर्ने शैलीबीच भिन्नता थियो । हार्डी नास्तिक थिए तर रामानुजन कट्टर हिन्दु धर्मावलम्बी ।

रामानुजनलाई सन् १९१६ मार्चमा बीएको रिसर्च डिग्री प्रदान गरियो । सन् १९१७ डिसेम्बर ६ मा रामानुजन लन्डन म्याथम्याटिकल सोसाइटीको सदस्य चुनिए । अनि सन् १९१८ मा उनी रोयल सोसाइटी को फेलो बने । उनलाई अण्डाकार प्रकार्य र सङ्ख्याको सिद्धान्तमा अनुसन्धान गरेबापत सो छात्रवृत्ति दिइएको थियो । सुरुमा उनलाई ट्रिनिटी छात्रवृत्ति दिन अस्वीकार गरिएको थियो । ट्रिनिटी छात्रवृत्ति पाउने उनी पहिलो भारतीय हुन् ।


I have observed that $f(e^{2\pi x})$ is of such a nature that its value is very small when x lies between 0 and 3 (its value is less than a few hundreds when x = 3) and rapidly increases when x is greater than 3.

दाबी प्रमाणित रूपमा देख्न चाहेको बताए । साथै हार्डीले रामानुजनलाई बेलायत बोलाउने योजना बनाए तर शाकाहारी रामानुजनले हिन्दु परम्पराविपरीत म्लेच्छ भूमिमा जाने अस्वीकार गरे । त्यसपछि क्याम्ब्रिजस्थित ट्रिनिटी कलेजका गणितका एक व्याख्याता गिल्बर्ट वाकर रामानुजनको कामबाट प्रभावित भए र उनलाई क्याम्ब्रिजमा आउन आग्रह गरे । रामानुजनले बेलायत नजाने भनेपछि उनीसँग हार्डीको पत्राचार रोकिएको थियो ।

हार्डीले मद्रासमा रहेका ई.एच. नेभिललाई रामानुजनलाई बेलायत किन नल्याउने भनी सोधे । नेभिलले रामानुजनलाई क्याम्ब्रिज जाने कि नजाने भनेर प्रश्न गरे । रामानुजनले जाने बताए । साथै नेभिलले बेलायतमा रामानुजनलाई धर्म परिवर्तन गर्न आवश्यक नरहेको बताएका थिए । त्यसपछि रामानुजनको परिवारले उनलाई बेलायत जान छुट दिएको थियो । सन् १९१४ मार्च १७ मा रामानुजन जहाजबाट बेलायत गएका थिए ।

## गणितमा योगदान

रामानुजनले गणितका क्षेत्रमा पुऱ्याएको योगदान महत्त्वपूर्ण छ । गणितका क्षेत्रमा उनले पुऱ्याएको योगदानमा जटिल विश्लेषण, सङ्ख्या सिद्धान्त, अनन्त शृङ्खला र निरन्तर भिन्न रहेका छन् ।

पाइका लागि अनन्त शृङ्खला : सन् १९१४ मा रामानुजनले 'पाई' का लागि अनन्त शृङ्खलाको एक सूत्र खोजे । जुन आज प्रयोग हुने धेरै एल्गोरिदमको आधार बनेको छ । $\pi$ (pi) को सही अनुमान पत्ता लगाउनु गणितको इतिहासमा सबैभन्दा महत्त्वपूर्ण चुनौतीमध्ये एक मानिएको छ ।

**खेल सिद्धान्त** : रामानुजनले कैयौँ चुनौतीपूर्ण गणितीय समस्या समाधानका लागि नयाँ विचार खोजे । जसले खेल सिद्धान्त (गेम थ्यौरी) को विकासमा ठूलो योगदान पुऱ्याएको छ । खेल सिद्धान्तमा उनको योगदान पूर्णतया अन्तरज्ञान र प्राकृतिक प्रतिभामा आधारित छ ।


Madras Port Trust Office
Accounts Department.
27th February 1913.

Dear Sir,

I am very much gratified on perusing your letter of the 8th February 1913. I was expecting a reply from you similar to the one which a Mathematics Professor at London wrote asking me to study carefully Bromwich's Infinite series and not fall into the pitfalls of divergent series. I have found a friend in you who views my labours sympathetically. This is already some encouragement to me to proceed with my onward course. I find in many a place in your letter rigorous proofs are required and so on and you ask me to communicate the methods of proof. If I had given you my methods of proof I am sure you will follow the London Professor. But as a fact I did not give him any proof but made some assertions as the following under my new theory. I told him that the sum of an infinite no of terms of the series:— $1+2+3+4+\cdots\cdots = -\frac{1}{12}$ under my theory. If I tell you this you will at once point out to me the lunatic asylum as my goal. I dilate on this simply to convince you that you will not be able to follow my methods of proof if I indicate the lines on which I proceed in a single letter. You may ask how you can accept results based upon wrong premises. What I tell you is this. Verify the results I give and if they agree with your results, got by treading on the groove in which the present day mathematicians move, you should at least grant that there may be some truths in my fundamental basis. So what I now want at this stage is for eminent professors like you to recognise that there

**नक्कली थिटा प्रकार्य (मक थिटा फङ्सन)** : रामानुजनले नक्कली थिटा प्रकार्यका बारेमा सविस्तार आफ्नो अवधारणा अघि सारेका छन्।

**रामानुजन सङ्ख्या** : १७२९ लाई रामानुजनको सङ्ख्या (नम्बर) भनेर चिनिन्छ।

**वृत्त विधि** : रामानुजनले जीएच हार्डीसँग मिलेर वृत्त विधि आविष्कार गरेका थिए। जसले २०० भन्दा माथिको सङ्ख्याहरूको विभाजनको पहिलो अनुमान दिन्छ। यस विधिले २० औँ शताब्दीको जटिल समस्याहरू, जस्तै वारिङको अनुमान र अन्य अतिरिक्त प्रश्नहरू हल गर्न महत्त्वपूर्ण योगदान पुऱ्याएको थियो।



(1) [16]

In page 36 it is stated that "the no. of prime nos less than $x = \int_2^x \frac{dt}{\log t} + P(x)$ where the precise order of $P(x)$ has not yet been determined"

The precise order itself is not sufficient to find the value of $P(x)$. Even if it is known that $\frac{P(x)}{\phi(x)} = 1$ when $x$ becomes infinite, $\phi(x)$ being a known function of $x$, $P(x)$ cannot be supposed to have been found with sufficient accuracy; for example $(x + \frac{x}{\log\log x})/x = 1$ when $x$ becomes infinite, yet the difference between $x + \frac{x}{\log\log x}$ and $x$ is very great.

From the forms of $P(x)$ given in page 53, viz. $O\{\frac{x}{(\log x)^{\Delta}}\}$, $O(xe^{-a\sqrt{\log x}})$, $O(\sqrt{x})$, &c it appears that from particular numerical values the forms have been guessed.

Even in regular functions it is difficult to have an idea of the form from the numerical values. In such a complicated function as $P(x)$ it is difficult to have an idea even for large values of $\log x$; for example even if we give billions for $x$, $P(x)$ is very difficult to be found.

I have observed that $P(e^{2\pi x})$ is of such a nature that its value is very small when $x$ lies between 0 and 3 (its value is less than a few hundreds when $x = 3$) and rapidly increases when $x$ is greater than 3.

I I have found a function which exactly represents the no. of prime nos less than $x$, 'exactly' in the sense that the difference between the function and the actual no of primes is generally 0 or some small finite value even when $x$ becomes infinite.

**रामानुजन थिटा प्रकार्यले ज्याकोबी थिटा प्रकार्यको रूपलाई सामान्य बनाउँछ । रामानुजन थिटा प्रकार्य बोसोनिक स्ट्रिङ सिद्धान्त, सुपरस्ट्रिङ सिद्धान्त र एम सिद्धान्तमा महत्त्वपूर्ण आयाम निर्धारण गर्न प्रयोग गरिन्छ ।**

**थिटा प्रकार्य (थिटा फङ्सन) :** थिटा प्रकार्य धेरै जटिल चरहरूको एक विशेष प्रकार्य हो । जर्मन गणितज्ञ कार्ल गुस्ताभ ज्याकोब ज्याकोबीले ज्याकोबी थिटा प्रकार्य भनेर चिनिने धेरै नजिकका थिटा प्रकार्य आविष्कार गरेका थिए तर पछि थिटा प्रकार्यको व्यापक अध्ययन रामानुजनले गरेका थिए । रामानुजन थिटा प्रकार्यले ज्याकोबी थिटा प्रकार्यको रूपलाई सामान्य बनाउँछ । रामानुजन थिटा प्रकार्य बोसोनिक स्ट्रिङ सिद्धान्त, सुपरस्ट्रिङ सिद्धान्त र एम सिद्धान्तमा महत्त्वपूर्ण आयाम निर्धारण गर्न प्रयोग गरिन्छ ।

रामानुजनका अन्य उल्लेखनीय योगदानमा हाइपरजियोमेट्रिक शृङ्खला, रिमन शृङ्खला, अण्डाकार अभिन्न, भिन्न शृङ्खलाहरूको सिद्धान्त र जेटा प्रकार्यको कार्यात्मक समीकरणहरू समावेश छन् ।

## अन्तिम दिन

रामानुनज दुई वर्षका लागि बेलायत गएका थिए । उनी तमिलनाडु जस्तो गर्मी ठाउँबाट बेलायत पुगेका थिए । बेलायतको हावापानी चिसो थियो । त्यस्तो मौसममा पनि उनी नियमित दैनिक २० घण्टा समय अध्ययन अनुसन्धानमा बिताउँथे । रामानुजन बेलायतमा रहेकै बेला पहिलो विश्वयुद्ध सुरु भयो ।

विश्वयुद्धका कारण विश्वभर आपूर्ति शृङ्खला अवरुद्ध हुन पुग्यो । रामानुजन दक्षिण भारतीय शाकाहारी परिकार नै रोज्थे । तर विश्वयुद्धका कारण बेलायतमा चामलको आयात नियमित हुन सकेन । त्यसैले उनले बेलायत बसाइका क्रममा नियमित आफ्नो रुचिको खानासमेत खान पाएनन् ।

धार्मिक स्वभाका रामानुजन लन्डनको चिसोमा पनि दिनहुँ बिहान नुहाउँथे । खानपिन नमिल्नु र चिसो वातावरणका कारण उनको स्वास्थ्य कमजोर बन्दै गयो । रामानुजनको पेटमा अल्सर देखियो । रोगले च्यापेपछि अस्पताल भर्ना भएका रामानुजनले भागेर रेलको लिकमा हामफाल्न लाग्दा हार्डीले बचाएका थिए ।

सन् १९१९ मा रामानुजन भारत फर्के । त्यसपछि उनको अवस्था झनै बिग्रियो । सन् १९२० अप्रिल २६ मा मात्र ३२ वर्षको उमेरमा तमिलनाडुको कुम्भकोनममा उनको निधन भयो । ▪

# बृहस्पतिको अन्वेषण

**मा**निसले बृहस्पति ग्रहको अध्ययन/अनुसन्धान गर्न लागेको चार सयभन्दा बढी वर्ष भएको छ। सन् १९७० को दशकदेखि मात्र मानिसले त्यहाँ अन्तरिक्ष यान पठाइरहेको छ। सन् १९७३ यता नौ वटा अन्तरिक्ष यान बृहस्पति नजिक पुगेका छन् र तिनीहरूको सहयोगबाट मानिसले बृहस्पतिका बारेमा धेरै कुरा पत्ता लगाएको छ।



■ ज्योत्सना श्रेष्ठ

यी सबै बृहस्पति अन्वेषण अभियान नेसनल एरोनटिक्स एन्ड स्पेस एडमिनिस्ट्रेसन (नासा) द्वारा सञ्चालन गरिएको थियो। तीमध्ये दुई यान त बृहस्पतिको धेरै नै नजिक पुगे। अन्यले बृहस्पतिको कक्षमा प्रवेश नगरी अवलोकन मात्र गरेका थिए। बृहस्पति ग्रहको हालसम्म भएका अन्वेषण यस प्रकारका छन् :

## पायोनियर अभियान (सन् १९७३ र १९७४ )

बृहस्पतिको खोज गर्ने पहिलो अन्तरिक्ष यान पायोनियर-१० थियो। जो सन् १९७२ डिसेम्बरमा ग्रह नजिक पुग्यो। त्यसपछि पायोनियर-११ ले बाह्र महिनापछि बृहस्पतिको नजिक भएर अगाडि बढ्यो। पायोनियर-१० ले बृहस्पति र यसको ग्यालिलियन चन्द्रमाको पहिलो 'क्लोज-अप' तस्बिर खिचेको थियो।

यस अन्तरिक्ष यानले बृहस्पतिको वायुमण्डलको अध्ययन तथा त्यसको चुम्बकीय क्षेत्रको अध्ययन गऱ्यो। साथै उक्त अन्तरिक्ष यानले यसको विकिरण 'बेल्ट' अवलोकन गऱ्यो। पायोनियर-११ ले सन् १९७४ डिसेम्बर ४ मा बृहस्पतिको 'क्लाउड टप्स' को लगभग ३४ हजार किलोमिटर माथिबाट सबैभन्दा नजिकबाट यसलाई नियालेको थियो। यसले ठूला रातो दागको तस्बिर

खिच्यो, बृहस्पतिको ध्रुवीय क्षेत्रहरूको अवलोकनसमेत गरेको थियो। साथै बृहस्पतिको चन्द्रमा कालिस्टोको द्रव्यमान पायोनियर-११ ले निर्धारण गरेको थियो। यी दुई अन्तरिक्ष यानद्वारा एकत्रित जानकारीले खगोलविद्हरूलाई यस विशाल ग्रहको वातावरण बुझ्न धेरै सहयोग पुग्यो।

**भोएजर अभियानले ग्यालिलियन चन्द्रमाबारे हाम्रो बुझाइमा ठूलो सुधार ल्यायो, बृहस्पतिका रिङ पनि पत्ता लगायो।**

## भोएजर अभियान (सन् १९७९)



सन् १९७९ जनवरी १ देखि भोएजर-१ ले बृहस्पतिको तस्बिर खिच्न सुरु गरेको थियो। सन् १९७९ मार्च ५ मा बृहस्पतिको केन्द्रदेखि तीन लाख ४९ हजार किमीको दूरीमा रहेर यसले ठूलो 'रिजोल्युसन' को तस्बिर खिच्यो। भोएजर-१ ले बृहस्पतिको तस्बिर अप्रिलसम्म खिच्यो। यसपछि चाँडै भोएजर-२ यान सन् १९७९ जुलाई ९ मा बृहस्पतिको पाँच लाख ७६ हजार किलोमिटर नजिक पुग्यो। उक्त यानले बृहस्पतिको रिङ पत्ता लगायो र यसको वायुमण्डलमा भएका जटिल भुमरी र यसका उपग्रहमा भएका सक्रिय ज्वालामुखीको अवलोकन गरेको थियो।

भोएजर अभियानले ग्यालिलियन चन्द्रमाबारे हाम्रो बुझाइमा ठूलो सुधार ल्यायो, बृहस्पतिका रिङ पनि पत्ता लगायो। ग्रहको तिनीहरूले खिचेका तस्बिरबाट बृहस्पतिका ठूला दाग घडीको विपरीत दिशामा सक्रिए आँधी भएको पत्ता लागेको थियो। त्यहाँ अन्य साना तूफान र चक्रवात पनि पत्ता लागे।

बृहस्पतिको चन्द्रमा आयोमा ज्वालामुखी गतिविधिको खोज यस अभियानको सबैभन्दा ठूलो अप्रत्याशित खोज मानियो। एक सक्रिय ज्वालामुखी पृथ्वीबाहेक अन्य आकाशीय पिण्डमा अवलोकन गरिएको यो पहिलो पटक थियो। साथै भोएजर यानले आयो चन्द्रमा नौ ज्वालामुखी विस्फोट भएको रेकर्ड गऱ्यो।

## युलेसिस (सन् १९९२ देखि २००४)

युलेसिस एउटा रोबोटिक यान थियो। जसको प्राथमिक लक्ष्य सूर्यको परिक्रमा गर्नु र यसका सबै अक्षांशको अध्ययन गर्नु थियो। यसले सन् १९९४/१९९५, २०००/२००१ तथा २००७/२००८ मा सूर्यको अध्ययन गरेको थियो। थपमा यस यानले धेरै धुमकेतुको अध्ययनसमेत गऱ्यो। सन् १९९२ फरवरी ८ मा युलेसिस यानले चार लाख ५१ हजार किलोमिटरको दूरीबाट बृहस्पतिको उत्तरी ध्रुव नियालेको थियो। यस यानले बृहस्पतिको चुम्बकीय क्षेत्रको मापन पनि गऱ्यो। सन् २००४ फेब्रुअरीमा यो यान फेरि बृहस्पतिको नजिक पुगेको थियो।




## कासिनी (सन् २०००)

सन २००० मा क्यासिनी यानले शनि ग्रह जाँदै गर्दा बाटोमा परेको बृहस्पति ग्रहको उच्च 'रिजोल्युसन' का तस्बिर खिचेको थियो। यो यान बृहस्पति ग्रहको सबैभन्दा नजिक सन् २००० डिसेम्बर ३० मा पुग्यो। यसले बृहस्पतिको लगभग २६ हजार तस्बिर खिचेको थियो। यसले रङ्गिन तस्बिरसमेत खिच्यो।

## न्यु होराइजन (सन् २००७)

न्यु होराइजन यान यमतिर गइरहेका बेला गुरुत्वाकर्षण बलका लागि बृहस्पति नजिक भएर उडेको थियो। सन् १९९० को दशकमा युलेसिसपछि बृहस्पतितिर सिधै प्रक्षेपण गरिएको पहिलो यान थियो। न्यु होराइजनका उपकरणले बृहस्पतिको सानो रातो दाग र ग्रहको चुम्बकीय क्षेत्र तथा कमजोर रिङ प्रणालीको पनि अध्ययन गऱ्यो।



## ग्यालिलियो (सन् १९९४–२००३)

बृहस्पतिको परिक्रमा गर्ने पहिलो अन्तरिक्ष यान ग्यालिलियो अर्बिटर थियो। जसले सन् १९९५ डिसेम्बर ७ मा बृहस्पतिको परिक्रमा गऱ्यो। यसले सन् २००३ सेप्टेम्बर २१ मा बृहस्पतिसँग नियोजित




ठक्कर खाएर नष्ट हुनुअघि त्यसको ३५ पटक परिक्रमा गरिसकेको थियो। ग्यालिलियो यान धुमकेतु सुमाकर लेभी सन् १९९४ मा बृहस्पति ग्रहमा ठोक्किँदाको साक्षी बनेको थियो।

## जुनो (२०१६ देखि सक्रिय)

बृहस्पति ग्रहको विस्तृत अध्ययन गर्न नासाले सन् २०११ अगस्ट ५ मा जुनो यान प्रक्षेपण गरेको थियो। यसले सन् २०१६ जुलाई ५ मा बृहस्पतिको ध्रुवीय कक्षमा प्रवेश गर्‍यो। अन्तरिक्ष यानले ग्रहको संरचना, गुरुत्वाकर्षण क्षेत्र, चुम्बकीय क्षेत्र, र ध्रुवीय चुम्बकीय क्षेत्र अध्ययन गरिरहेको छ। जुनोले बृहस्पति कसरी बनेको हो, ग्रहको चट्टानी 'कोर' छ वा छैन, घना वायुमण्डलमा रहेको पानीको मात्रा र ग्रहभित्र द्रव्यमान वितरणको अवस्था जाँच गरिएको छ।

## प्रस्तावित अभियान

नासाको युरोपा क्लिपर अन्तरिक्ष यानले सन् २०२४ मा क्उबअभह Falcon Heavy rocket बाट बृहस्पतिको चन्द्रमा युरोपाको यात्रा सुरु गर्ने छ। यसको उद्देश्य युरोपाले जीवनलाई समर्थन गर्न सक्छ कि भनेर पत्ता लगाउनु हो। सन् २०३० मा बृहस्पतिको कक्षमा पगेर यसले पृथ्वीबाहेक अन्यत्र अर्को महासागर छ कि छैन भनेर अन्वेषण गर्ने छ।

१. बृहस्पति सौर्यमण्डलको चौथो सबभन्दा चम्किलो पिण्ड हो। सूर्य, चन्द्रमा र शुक्र ग्रहपछि बृहस्पतिलाई चौथो चम्किलो पिण्ड मानिन्छ। यो ग्रहलाई हामीले नाङ्गो आँखाले पनि देख्न सक्छौँ।
२. बृहस्पतिको एक दिन अन्य सबै ग्रहका भन्दा छोटो हुन्छ। यसले केवल नौ घण्टा ५५ मिनेटमा आफ्नो धुरीमा फन्को लगाउँछ।
३. बृहस्पति धेरै भारी छ। यसको शक्तिले सूर्यलाई पनि प्रभावित गर्छ। बृहस्पतिको द्रव्यमान बाँकी सबै ग्रहको कुल द्रव्यमानभन्दा ढाई गुणा ज्यादा छ।
४. बृहस्पति ग्रह ९० प्रतिशत हाइड्रोजन, १० प्रतिशत हिलियम तथा केही मात्रामा मिथेन, पानी, अमोनिया र चट्टानबाट बनेको छ। यसको सतह ठोस नभएर ग्यासयुक्त छ।
५. बृहस्पतिमा पछिल्लो ३५० वर्षदेखि एक आँधी चलिरहेको छ र यो आँधी रातो बादलबाट बनेको छ। यो आँधी तीन वटा पृथ्वी अट्ने जति ठूलो छ। तस्बिर हेर्दा यो एक रातो दागका रूपमा देखिन्छ। यसलाई बृहस्पतिको रातो आँखा पनि भनिन्छ।
६. सन् १६१० मा ग्यालिलियोले सबभन्दा पहिले बृहस्पतिलाई दुरबिनद्वारा हेरेका थिए। बृहस्पतिका ९५ चन्द्रमा वा उपग्रह छन्। जसमा उपग्रह गेनीमेड सबभन्दा ठूलो छ। यो बुध ग्रहभन्दा पनि ठूलो छ।
७. एक किसिमले बृहस्पति ग्रह पृथ्वीका लागि एक रक्षक हो। पृथ्वीतर्फ आउने कैयौँ पिण्डलाई यसले आफ्नो गुरुत्वाकर्षण बलबाट आफूतिर तानेर हाम्रो रक्षा गर्छ।
८. हिन्दु धर्मको मान्यता अनुसार बृहस्पति देवताहरूका गुरु हुन्। रोमनहरूका अनुसार बृहस्पति शनि ग्रहको छोरा र देवताहरूका राजा, ओलम्पसका सम्राट तथा रोमन साम्राज्यका रक्षक हुन्। ■



# जीवनधारा पानी पँधेरा



■ यमबहादुर दुरा

चराचर जगत्मा पानीको सर्वोपरि र बहुआयामी महत्त्वलाई मनन गरेर महान् चित्रकार लियोनार्दो दा भिन्चीले भनेका रहेछन्, "पानी प्रकृतिको चालक शक्ति हो ।" हुन पनि जीवात्माको प्राण रक्षादेखि बिजुली जस्तो बहुपयोगी ऊर्जा उत्पादनसम्म पानीको अहम् भूमिका छ । त्यसै भनिएको होइन, पानी नै जीवन हो भनेर ।

हाम्रो जीवनशैली र पानीबीच अवर्णनीय नाता छ। प्राणी जगत्को साझा घर पृथ्वी र पानीबीचको साइनो पनि गजबकै छ। पृथ्वीको ७१ प्रतिशत सतह पानीले घेरिएको छ। पानी नै पानीले घेरिएको भए पनि पृथ्वीमा मानिसले पिउनयोग्य पानी ज्यादै न्यून छ।

क्यानडास्थित 'सेफ ड्रिङ्किङ वाटर फाउन्डेसन' को वेबसाइटमा प्रकाशित सामग्रीका अनुसार विश्वमा उपलब्ध पानीमध्ये

केवल तीन प्रतिशत मात्र पिउन लायक छ। बाँकीचाहिँ समुद्रको नुनिलो पानी तथा हिउँका रूपमा रहेको छ। यद्यपि पानीको त्यही सानो हिस्सा पृथ्वीवासीका लागि पर्याप्त छ।

पृथ्वीको दुई तिहाइ भाग पानीले ओगटेको भए पनि विश्व जनसङ्ख्याको एउटा ठूलै हिस्सा काकाकुल अवस्थामा छ। विश्व बैङ्कले जारी गरेको एक प्रतिवेदन अनुसार अझै पनि दुई अर्ब जनसङ्ख्या खानेपानीको सहज पहुँच बाहिर नै छ। प्रतिवेदनका अनुसार अहिले ७४ प्रतिशत जनसङ्ख्या खानेपानीको सहज पहुँचमा छ।

नेपाल जलस्रोतमा विश्वकै धनी मुलुक मानिए पनि यहाँ जनसङ्ख्याको एउटा ठूलै हिस्सा पानीको सहज पहुँचबाट वञ्चित छ। संयुक्त राष्ट्रसङ्घ बालकोष (युनिसेफ) का अनुसार नेपालमा ३५ लाख मानिस खानेपानीको सहज पहुँचबाट वञ्चित छ। सन्तोषकुमार बस्नेत र भरत अधिकारीकृत पुस्तक 'पानीको संरक्षण र बहुपयोग' मा उल्लेख भए अनुसार नेपालको २० प्रतिशत जनसङ्ख्या पिउने पानीको सहज पहुँचबाट वञ्चित छ।



## पँधेरो संस्कृति

बाँच्नका लागि पानी अपरिहार्य भएकाले मानव जातिले आफ्नो उत्पत्तिको उषाकालदेखि नै पानीको उपयोग गरेको तथ्य सर्वस्वीकार्य छ। प्रश्न आउँछ, मानिसले कहिलेदेखि व्यवस्थित रूपमा पानी उपयोग गर्न थाले ? यसको कुनै निश्चित उत्तर भेटिँदैन। युनानी, रोमेली, सिन्धु घाटी, नाइल नदी, ह्वाङ्हो (पहेँलो नदी) जस्ता विश्वका प्राचीनतम् सभ्यतामा पानीको व्यवस्थित उपयोग गर्ने बारे अनेकन् अभ्यास भएको पाइन्छ।

अब नेपालतिर फर्कौं। पानी उपयोगको सन्दर्भमा पानी–पँधेरालाई कसै गरी पनि भुल्न मिल्दैन। पानी–पँधेरा नेपाली जनजीवनको मौलिक पहिचान हो। सर्वसाधारणलाई सफा र स्वच्छ पानी उपहार दिनुमा पानी–पँधेराको उल्लेखनीय योगदान छ। 'जर्नल अफ वाटर, सेनिटेसन, एन्ड हाइजिन फर डिभलप्मेन्ट' (वर्ष ११, अङ्क ६, नोभेम्बर, २०२१) मा प्रकाशित एक शोधपत्रका अनुसार नेपालमा ५१.६९ प्रतिशत जनसङ्ख्याले पाइपबाट वितरित खानेपानी प्राप्त गर्छन् भने ४८.३१ प्रतिशतले अझै पनि स्थानीयस्तरमा उपलब्ध स्रोतबाट पानी ग्रहण गर्छन्।

प्रस्तुत तथ्याङ्कले नेपालमा लगभग आधा जनसङ्ख्याले पानी–पँधेरा, कुवा वा अन्य स्रोतबाट पानी प्राप्त गर्छन् भन्ने दर्शाउँछ। नेपालमा 'पँधेरो संस्कृति' को अभ्यास युगौँ पुरानो देखिए पनि यसको अभिलेख लगभग १५ सय वर्ष पुरानो देखिन्छ। काठमाडौँ उपत्यकामा



लिच्छविकालदेखि नै ढुङ्गेधारा अस्तित्वमा आएको पाइन्छ तर त्यसभन्दाअघिको ढुङ्गेधाराको अभिलेख भेटिँदैन।

ऋद्धि प्रधानले 'एन्सिएन्ट नेपाल' मा लेखेको शोधपत्रका अनुसार मानदेवका नाति भारविले सन् ५५० मा हाँडीगाउँमा ढुङ्गेधारा निर्माण गरेका थिए। काठमाडौँ उपत्यकाको वास्तुकलामा विद्यावारिधि गरेका जर्मन नागरिक रेमन्ड ओ. ए. बेकर रिटरस्पकले 'एन्सिएन्ट नेपाल' मै लेखेको शोधपत्रका अनुसार पाटनको मङ्गहिटीमा सन् ५७० मा ढुङ्गेधारा बनेको थियो।

कीर्ति तथा धर्म प्राप्तिका लागि पनि पानी-पँधेरा निर्माण गर्ने चलन प्राचीनकालदेखि नै कायम रहेको देखिन्छ। 'प्राचीन नेपाल' मा प्रकाशित आफ्नो शोधपत्रमा प्रकाश दर्नालले इतिहासकार धनवज्र वज्राचार्यले हाँडीगाउँ र मङ्गलबजारको अभिलेख अध्ययन गर्दा लिच्छविकालमा कीर्ति कायम गर्न पाटी, पौवा, धर्मशाला, धारा बनाउने चलन रहेको फेला पारेको उल्लेख गरेका छन्। अहिले पनि कतिपय धर्मात्माले यदाकदा धारा-पँधेरा निर्माण गर्ने तथा पुराना पानी-पँधेरा मर्मत-सम्भार गर्ने गरेको पाइन्छ।

**पानी-पँधेरामा हाम्रो मौलिक जीवनशैली, ग्रामीण सौन्दर्य र आफ्नोपन पनि छचल्किएका छन्, जससँग नेपाली मन र मुटुले मितेरी गाँस्छन्।**



नेपालमा ढुङ्गेधाराको परम्परा निकै समृद्ध देखिन्छ। त्यसमा पनि काठमाडौँ उपत्यकाका ढुङ्गेधारा विशेष उल्लेखनीय मानिन्छ। उपत्यकाका ढुङ्गेधारामा पर्याप्त आफ्नोपन रहेकाले कतिपयले यसलाई नेपालको मौलिक परम्परा मान्ने गरेका छन्। काठमाडौँ उपत्यकाका कतिपय ढुङ्गेधारा तामा, ढलोट र पित्तल जडित छन्। कतिपय ढुङ्गेधारामा सुनको जलप लगाइएको पाइन्छ। यस्ता धारा सुनधारा नामबाट परिचित छन्।

कतिपय ढुङ्गेधारामा गोही मूर्ति जडित छन्। शास्त्रमा गङ्गाको वाहन गोही मानिएकाले ढुङ्गेधारामा यस्तो आकृति बनाइएको हुनु पर्छ। कतिपय धारामा सूर्यवंशी राजा दिलीपका पुत्र भगीरथको मूर्ति राखिएको छ। भगीरथले गङ्गालाई धर्तीमा ल्याउन अविश्रान्त प्रयत्न गरेको पौराणिक कथा छ। यही आधारमा कसैले कुनै काम फत्ते गर्न अटुट तथा अविश्रान्त प्रयत्न गरेमा त्यसलाई 'भगीरथ प्रयत्न' भन्ने चलन छ।

यी सबै दृष्टिले काठमाडौँ उपत्यकाका ढुङ्गेधारा कुनै पनि अर्थमा चानचुने छैन भन्ने देखिन्छ। यसको वैज्ञानिकता, कलात्मकता, भव्यता तथा सांस्कृतिक वैभवबारे बेग्लै अध्ययन गर्न सकिन्छ। यसबारे थुप्रै स्वदेशी तथा विदेशी अध्येताले अध्ययन पनि गरिसकेका छन्। ढुङ्गेधारालाई स्थानीय स्रोत, साधन र सीप उपयोगको बेजोड नमूना मान्न सकिन्छ।'वर्ल्ड मोन्युमन्टस् फन्ड' को वेबसाइटमा प्रकाशित एक सामग्रीका अनुसार उपत्यकाका ढुङ्गेधाराबाट प्रतिदिन ३० लाख लिटर पानी उपलब्ध हुन्छ।

अहिले आएर पुर्खाको बहुमूल्य विरासतका रूपमा रहेका ढुङ्गेधाराको उचित संरक्षण हुन सकेको छैन। अन्धाधुन्ध र विवेकहीन निर्माण कार्यले पानीको प्रवाह-मार्ग रोकिन गई कैयौँ ढुङ्गेधारा स्वयम् काकाकुल हुन पुगेका छन्। एक समाचार अनुसार काठमाडौँ उपत्यकाभित्र तीन सय ९४ ढुङ्गेधारा फेला परेका छन्। तीमध्ये दुई सय २९ बाट निरन्तर पानी आइरहेको छ। ६२ वटा ढुङ्गेधारा सुकिसकेका छन्। यसैगरी ५७ वटा ढुङ्गेधारा पुरिइसकेको देखिन्छ।

पानी-पँधेरा हाम्रो मौलिक जीवनधारा हो। यसमा सामाजिक अन्तरघुलन आध्यात्मिक पद्धति, तिर्खा व्यवस्थापन र प्रकृति संरक्षण सूक्ष्मतम् अवयवहरू लुकेका छन्। पानी-पँधेरामा हाम्रो मौलिक जीवनशैली, ग्रामीण सौन्दर्य र आफ्नोपन पनि छचल्किएका छन्,



जससँग नेपाली मन र मुटुले मितेरी गाँस्छन् । नेपाली मन र मुटुले हाम्रो सांस्कृतिक पहिचानका रूपमा पानी–पँधरोप्रति स्नेहभाव प्रकट गर्छन् । यही साझा भावना राष्ट्रकवि माधव घिमिरेका गीतमा झल्कन्छ :

*लाग्दछ मलाई रमाइलो मेरै पाखा पखेरो,*
*हिमालचुली मुन्तिर पानी भर्ने पँधेरो*

हाम्रो मन र मुटुसँग साइनो गाँसिएको मौलिक पानी–पँधेरो क्रमिक रूपमा पतनको सँघारतिर उन्मुख हुँदैछ । विवेकहीन डोजर संस्कृति, बसाइँसराइ, गाउँ गाउँमा सडक विस्तार, बदलिँदो जीवनशैली, शहरीकरण आदिले पानी–पँधेरो निरन्तर लोप हुने क्रममा छ ।

## पँधेरा नै तीर्थस्थल

पँधेरा हामीले नचिनेको वा वास्ता नगरेको तीर्थस्थल हो । पँधेराको महत्त्व अवर्णनीय छ । देवकर्म तथा धार्मिक अनुष्ठानमा विभिन्न चर्चित तीर्थस्थलको पानी चढाउने गरिन्छ । त्यसो गर्न सम्भव नभए सर्वसुलभ किसिमले उपलब्ध पँधेराको पानीलाई तीर्थस्थलको पानी ठानेर अर्पण गर्ने चलन छ ।

हामीकहाँ पनि गङ्गा वा जलाशयमा नुहाउँदा पुण्य मिल्छ भन्ने लोकविश्वास छ । यस्ता गङ्गा वा जलाशयमा नुहाउन सधैँ सम्भव हुँदैन । यस्तो अवस्थामा स्थानीय धारा–पँधेरालाई नै गङ्गा सम्झेर विशाल जलाशयको अभावपूर्ति गर्ने चलन छ । स्थानीय धारा–पँधेरामा नुहाउँदा त्यसलाई गङ्गा सम्झेर 'हरहर गङ्गे' भनी पुकार्ने चलन हामीकहाँ छँदैछ ।

कात्तिक र माघ महिनामा जलाशयमा नुहाउँदा पुण्य मिल्ने हिन्दु शास्त्रमा व्याख्या गरिएको पाइन्छ । माघेसङ्क्रान्तिमा कुनै प्रख्यात जलाशयमा नुहाउन नपाए स्थानीय पँधेरालाई लोकप्रसिद्ध जलाशय ठानेर नुहाउने चलन नयाँ होइन । माघेसङ्क्रान्तिमा थारू, मगरलगायतका जनजाति समुदायले पनि स्थानीय जलाशयमा नुहाउने र जातीय रीतिथिति अनुसार उत्सव मनाउने चलन कायमै छ ।

विभिन्न धार्मिक तथा आध्यात्मिक अनुष्ठान सम्पन्न भएपछि त्यसमा प्रयोग भएका फूल तथा अन्य वनस्पति पँधेरामा सेलाउने कार्य गरिन्छ । दाहसंस्कार सम्पन्न भएपछि नजिकको पँधेरामा नुहाउने चलन पुरानै हो । पँधेरा केवल जलाशय होइन, मानव जीवनको व्यावहारिक तीर्थस्थल पनि हो ।

## स्नान–थेरापी

स्वास्थ्यका दृष्टिले स्नानको उच्च महत्त्व त छँदैछ, धार्मिक तथा आध्यात्मिक दृष्टिले पनि यसको महत्त्वपूर्ण स्थान छ । हिन्दु, इसाई, बौद्ध, जैन, इस्लामलगायत विश्वका प्रमुख धर्ममा नुहाएर शरीर शुद्धीकरण गर्ने कार्यलाई महत्त्व दिएको पाइन्छ । विभिन्न धार्मिक अनुष्ठान सुरु हुनुभन्दाअघि नुहाएर शरीर तथा आत्मा शुद्ध पार्ने चलन कायमै छ ।

मुक्तिनाथको १०८ धारामा नुहाए पुण्य मिल्छ भन्ने मान्यताबाट प्रेरित भएर प्रत्येक वर्ष थुप्रै तीर्थयात्री त्यहाँ नुहाउन जान्छन् । यसैगरी बालाजुको बाइसधारालाई पनि



पुण्यस्थल मान्ने गरिन्छ । बाइसधारामा देवघाटलगायतका विभिन्न धार्मिकस्थलबाट पानी प्रवाहित भएर आउने र त्यस प्रकारको पानीले नुहाएमा चर्मरोग निको हुने तथा पुण्य मिल्ने जनश्रुति छ । यसैगरी गोसाइँकुण्ड, मातातीर्थ, गोदावरीस्थित नौधारा, मच्छेनारायणलगायतका धारा तथा कुण्डमा नुहाउँदा पनि पुण्य मिल्ने लोकविश्वास छ ।

डा. साफल्य अमात्यले 'गरिमा' (माघ, २०५९) मा 'लोकसंस्कृति र पानी' शीर्षक लेख लेखेका छन् । डा. अमात्यले आफ्नो लेखमा टोखाको सपनातीर्थमा स्नान गर्‍यो भने कुष्ठरोग निको हुने तथा भक्तपुरको गःछेँ टोलदेखि पूर्वमा अवस्थित गरुडपोखरीमा नुहाए रोगव्याधिले नसताउने जनधारणा रहेको चर्चा गरेका छन् ।

पँधेराका अतिरिक्त तातोपानी कुण्डमा नुहाएमा स्वास्थ्यलाभ हुने वैज्ञानिक तथ्य खुल्दै गएको छ । यसबाट मिल्ने स्वास्थ्यलाभका सम्बन्धमा विभिन्न शोधपत्र, चर्चित जर्नलमा बग्रेल्ती छापिएको पाइन्छ । नेपालका तातोपानी कुण्डमा सल्फर, सल्फेट, म्याग्नेसियम, पोटासियम, सोडियमलगायत विभिन्न खनिज तत्त्व भेटिएको पाइएको को व्यापकता तथा भव्यतालाई दर्शाउँछन् । अर्जुनधारा (झापा), बाघ धारो (कठजोर, रामेछाप), काउरे पँधेरा (मकैस्वाँरा, दुराडाँडा, लमजुङ), घाँसीकुवा (तनहुँ), सातधारा (जिता, लमजुङ), ललाङ पान्धारा (स्याङ्जा), घमिलीकुवा (लमजुङ) जस्ता स्थाननामले पानी–पँधेरासँग जोडिएको लोकजीवनको इतिहास बोल्छन् ।

काठमाडौँ उपत्यकाका ढुङ्गेधारा, सुनधारा, गैरीधारा, सरकारी धारा, कपुरधारा, सुकेधारा, तीनधारा, पान्धारा, बाइसधारा आदिले आफ्नै स्थानीय इतिहासको साक्षी बकिरहेका छन् । नेवार भाषामा धारा जनाउने शब्द 'हिटी' जोडिएका स्थाननाम काठमाडौँ उपत्यकामा थुप्रै भेटिन्छन् । जस्तै गाहिटी, ढोलाहिटी, ल्वँहिटी, क्वहिटी, थँहिटी, लुँहिटी, वहहिटी आदि । खोजिपस्ने हो भने यस्ता स्थाननामबाट स्थानीय सामाजिक तथा सांस्कृतिक इतिहासका गतिलै पेटारो खुल्न सक्छ ।

चिसापानी, तातोपानी, धरमपानी, पुरानो धारा, ठूलो पँधेरो, सानो पँधेरो, माथिल्लो पँधेरो, तल्लो पँधेरो, अर्चलाधारा, ढुङ्गेधारा, धारापानी आदि धेरै ठाउँमा भेटिने

**नेपाली लोकजीवनमा जरो गाडेर बसेको 'पँधेरो संस्कृति' लोक अभिव्यक्तिमा नझल्किइरहन कसरी सम्भव होला र ? हाम्रा लोकगीत तथा उखान–टुक्कामा पानी–पँधेरो स्वाभाविक किसिमले प्रतिविम्बित हुने गरेका छन् ।**

छ । यस्ता खनिज तत्त्वयुक्त तातोपानी कुण्डमा नुहाउँदा हाडजोर्नी तथा छालासम्बन्धी रोग निको हुने विभिन्न अध्ययनले देखाएको छ ।

नेपालमा दार्चुला, जुम्ला, डोल्पा, म्याग्दी, कास्की, मुस्ताङ, मनाङ, गोरखा, रसुवा, धादिङ, सिन्धुपाल्चोकलगायतका जिल्लामा तातोपानीको स्रोत रहेको पाइएको छ । सन्तमान राई, तारानिधि भट्टराई र दुर्गा खतिवडाले नेपालमा विद्यमान तातोपानीसम्बन्धी शोधपत्र तयार पारेका छन् । त्यस शोधपत्रमा नेपालमा ३५ वटा तातोपानीको स्रोतलाई सूचीकृत गरिएको छ ।

अचेल आधुनिक किसिमले निर्मित पानीको कुण्डमा बसेर बच्चा जन्माउने चलन पनि बढ्दै गएको छ । यसो गर्दा स्वास्थ्यका दृष्टिले आमा र बच्चा दुवैलाई लाभ हुन्छ भन्ने भनाइ छ ।

### स्थाननाम

पानी–पँधेरासँग जोडिएका स्थाननाम नेपालको भूगोलभरि बग्रेल्ती भेटिन्छन् । यसले हाम्रो 'पँधेरो संस्कृति' साझा स्थाननाम हुन् । अन्नपूर्ण सर्किटमा पर्ने मनाङ जिल्लाको एउटा प्रचलित स्थाननाम हो, धारापानी । त्यति मात्र होइन धारापानी साबिकको गाउँ विकास समितिको नाम पनि हो ।

धारासँग नाम जोडिएको काठमाडौँको दरबारमार्गस्थित तीनधारा संस्कृत पाठशालाले बेग्लै राजनीतिक तथा शैक्षिक विरासत बोकेको छ । काभ्रेको रोशी गाउँपालिकास्थित काफलडाँडामा रहेको झरनाको नाम नै 'तीनधारा झरना' ले धारा, पानी र झरनाको कथा भनिरहेको छ ।

हामीकहाँ जातीय समुदायको झल्को दिने धारा–पँधेरा पनि भेटिन्छन् । ठकुरी पँधेरा (म्याग्दी), बाहुन पँधेरा (म्याग्दी), दुरा पँधेरा (खजेगाउँ, दुराडाँडा, लमजुङ) आदि । दलित अनलाइन (२ असार, २०७६) मा प्रकाशित सामग्रीका अनुसार गुल्मीमा 'बाहुनको पँधेरा' तथा 'दमैको पँधेरा' रहेका छन् । यस्ता जातीय चिनारी झल्कने धारा–पँधेरा तथा स्थाननामले नेपाली समाजको जातीय विविधता तथा श्रेणीकृत सामाजिक संरचनालाई पनि इङ्गित गर्छन् ।



## लोक अभिव्यक्ति

'पँधेरो संस्कृति' नेपालको समृद्ध परम्परा हो चर्चा अघि नै भइसकेको छ। नेपाली लोकजीवनमा जरो गाडेर बसेको 'पँधेरो संस्कृति' लोक अभिव्यक्तिमा नझल्किइरहन कसरी सम्भव होला र ? हाम्रा लोकगीत तथा उखान–टुक्कामा पानी–पँधेरो स्वाभाविक किसिमले प्रतिविम्बित हुने गरेका छन् ।

'गरिमा' (माघ २०५९) मा प्रकाशित लेखमा संस्कृतिविद् डा. साफल्य अमात्यले पानी र लोकजीवनको नाता–सम्बन्ध केलाएका छन् । नेपालका विभिन्न जाति तथा समुदायमा प्रचलित पानी–पँधेरासम्बन्धी लोकगीतबारे अमात्यद्वारा चर्चा गरिएको छ । उनले नेवार, तामाङ, मगर, माझी, थारू आदि समुदायमा पानी, धारा वा जलाशयबारे प्रचलित गीतको पनि मीठो वर्णन गरेका छन् । यसैगरी मैथिली तथा भोजपुरी भाषामा प्रचलित पानी तथा धारासम्बन्धी गीतको चर्चा पनि गरेका छन् ।

नेपाली लोकगीतमा पानी–पँधेरोलाई बिर्सने कुरै भएन । 'पानी–पँधेरो, मायालाई नदेख्दा देउँसै अँधेरो', 'पानी खाने तिरतिरे धाराको, बस्यो माया नछुट्ने पाराको', 'बालाजुको बाइसै धारा, सम्झी सम्झी लालुमै नरोऊ है पियारा', 'पानीको जलधारा, के गरेर तिरुँला खै मैले आमाको दूधभारा', 'यति यति पानी, गङ्गैरानी' जस्ता पानी–पँधेरोको तस्बिर झल्कने गीत लोकस्मृतिमा छन्, जो अझै पनि लोककण्ठमा गुञ्जिने गर्छन् ।

विगतमा पनि केही गाउँठाउँले पानीको चर्को अभाव झेलेको पाइन्छ । त्यतिबेला महिलाहरूले पानी ओसार्न भोग्नुपरेका हैरानी एउटा बेग्लै अध्ययनको विषय हुन सक्छ । कुखुराको पहिलो डाँकोमै उठेर ढिकीजाँतो सकी पानी ओसार्ने काममा छोरी–बुहारी खटिनु पर्दथ्यो भन्ने चर्चा अझै सुन्न पाइन्छ । पँधेर्नीले धेरै टाढाबाट रातबिरात पानी ओसार्नुपर्ने बाध्यतालाई देखेर धर्मराज थापालाई एउटा गीत फुरेछ : 'बागलुङ बजार, पँधेर्नीका दुःख हजार ।'

लोकगीतका अतिरिक्त उखान–टुक्काहरूमा पनि पानी–पँधेराको प्रसङ्ग नआई छाड्दैन । जस्तै : 'थोरै थिए पँधेर्नी, धेरै भयो कुरा', 'तैँ रानी मै रानी, को भर्ने कुवाको पानी', 'पानी न पँधेरो, सधैँ अँध्यारो' जस्ता उखान–टुक्का जनजिब्रोमा प्रचलित छन् ।

## जलाधार संरक्षणको गुनिलो अभ्यास

पानीको मुहानमा जलदेवीको वास हुने लोकमान्यता छ । यही मान्यतालाई शिरोपर गरी पानीको मुहान वा पँधेरामा जलदेवीको पूजाअर्चना गर्ने चलन पनि छ । यति मात्र होइन पानीमा बस्ने माछा, नाग, भ्यागुता आदिको पूजा गरिन्छ । जुन हाम्रो जीवनशैलीको मौलिक रित नै हो ।

भनिरहन परेन मूलको शुद्ध र स्वच्छ पानी स्वस्थकर जीवनयापनका लागि अतिशय उपयोगी मानिन्छ । त्यसैले स्वस्थ रहनका लागि जीवनमा शुद्ध र स्वच्छ पानीको उच्चतम् महत्त्व छ । शुद्ध र स्वच्छ पानीले विभिन्न पोषक तथा अक्सिजन आपूर्ति गर्छ । यसले शरीरमा अम्लीयपन तथा क्षारीयपन (पीएच लेबल) समायोजन गर्न उल्लेखनीय भूमिका खेलेको पाइन्छ ।

स्वस्थ तन र मनका लागि पानी ताजा पनि आवश्यक छ । उखानै छ 'पानी खाने मूलको, छोरी ल्याउनु कुलको ।' लोकजीवनमा बासी पानी खान योग्य मानिँदैन । यही मान्यताबाट निर्देशित भएर गाउँघरमा हरेक दिन गाग्रीको पानी फेर्ने गरिन्छ ।

तर शहरी जीवनमा पानीका मामलामा हामी बहुधा सम्झौतापरस्त हुन पुगेका छौँ । महिनौँ पुरानो जारको पानी पैसा तिरीतिरी खान बाध्य छौँ । स्वच्छ र शुद्ध पानी आवश्यक पर्ने देवकर्म वा पूजाआजामा पनि उही पुरानो जारकै पानी प्रयोग गर्न विवश छौँ ।



हामीकहाँ पानीको मुहान वरिपरिको जमिन शुद्ध राख्ने, त्यहाँ बोटबिरुवा रोप्ने तथा तिनलाई सुरक्षित किसिमले हुर्काउने युगौँ पुरानो चलन छ । पानीको मुहान र धारा वरिपरि लगाइएका रुख-बिरुवाले पानीको मूल सुक्नबाट जोगाउँथे । यसले स्थानीय वातावरण हराभरा बनाउन आफ्नो तर्फबाट उच्चतम योगदान दिन्थ्यो ।

यही तथ्यलाई आत्मसात् गरेर पँधेरोमा रुख बिरुवा लगाउने विषयलाई विगतमा राजाज्ञामा समेत समावेश गरिएको पाइन्छ । इतिहासकार दिनेशराज पन्तकृत कृतिमा गोरखाको इतिहास (दोस्रो भाग) मा गोरखाका राजा राम शाहले पँधेरोमा वन पाल्न अह्राएको तथा पँधेराको रुख काट्नेबाट पाँच रुपियाँ दण्ड लिने थिति बाँधेको प्रसङ्ग उल्लिखित छ ।

विगतमा पँधेरामुनि पोखरी बनाइन्थ्यो । जहाँ घरपालुवा जनावर तथा अन्य पशुपन्छीको तिर्खा मेट्न सहयोग पुग्थ्यो । पोखरीको पानीलाई आवश्यकता अनुसार कृषिकर्मका लागि प्रयोग गरिन्थ्यो । यसैगरी पानीको स्रोत नभएका सुक्खा डाँडाकाँडामा पोखरी बनाइन्थ्यो, जहाँ वर्षायाममा आकाशबाट परेको पानी सङ्कलन हुन्थ्यो । यस्ता पोखरीले एकातिर पानीको अभावमा काकाकुल बनेका पशुपन्छीको तिर्खा मेटाउन सहयोग गर्थे भने अर्कोतिर जमिनमुनि पानी पुनर्भरण (रिचार्ज) गर्न सघाउँथे ।

यस्ता परम्परागत पोखरीले परोक्ष रूपमा पानीको मुहान रसिलो राख्न धेरथोर मद्दत गर्थे र खडेरीमा पानीको सङ्कट टार्न सघाउँथे । अचेल भएका पोखरी पनि मासिने क्रममा तीव्रता देखिन्छ । यसले पनि कुनै न कुनै रूपमा पानीको स्रोत सुक्न सहयोग गरेको छ ।





यस प्रकारका परम्परागत धारा तथा पोखरीबाट मानिस र प्रकृतिबीच सुसम्बन्ध कायम गर्ने असल चक्र निर्माण हुन्थ्यो। यसले अघोषित रूपमा स्थानीय 'जलाधार व्यवस्थापन' लाई सघाउँथ्यो। अहिले विकासका नाममा भएका विचारहीन गतिविधिले त्यो असल चक्र क्रमिक रूपमा भङ्ग हुँदै गएको छ। विकासका नाममा भित्रिएको 'बुल्डोजर संस्कृति' ले पानी–पँधेरा, पोखरी तथा चौतारीहरूलाई निष्फिक्री किसिमले नाश गरेर कङ्क्रिट संरचना तयार पार्नु नै बहादुरी हुन गएको छ।

## नजानिँदो संवादहीनता

'पँधेरो संस्कृति' विस्तारै मर्दैछ। हिजोका दिनमा पँधेरो सामाजिक जमघट र संवादको उर्वर थलो थियो। पानी भर्न, नुहाउन तथा लुगा धुन सबैजना पँधेरा जान्थे। यसले छिमेकीसँग भेटवार्ता गर्ने अवसर जुराउँथ्यो। जसले पँधेर्नी तथा अन्य ग्रामीणजनबीच विचार विनिमय गर्ने अवसर जुराउँथ्यो। त्यो सानो अवसर थिएन।

यस प्रकारको सामाजिक अन्तरघुलनबाट छरछिमेकको क्षण–क्षणको जानकारी मिल्थ्यो। जसबाट छरछिमेकीका सुखदुःख सजिलै थाहा हुन्थ्यो। पँधेरो अघोषित गाउँ सभा नै थियो। पँधेरामा भएको वार्तालापले घर घरको मनोविज्ञान बुझ्न सहज हुन्थ्यो। यसले गाउँको भावी कार्यनीतिलाई प्रत्यक्ष वा परोक्ष रूपमा दिशानिर्देश गर्थ्यो। यस अर्थमा पँधेरो अघोषित ग्रामीण सञ्चार केन्द्र थियो।

अचेल शहरमा त के कुरा गाउँघरमा पनि घरभित्रै धारा, स्नान कक्ष तथा वासिङ मेसिन जडान हुन थालेका छन्। परिणामस्वरूप विचार विनिमयको साझा थलो बनेको पानी–पधेँरा विरानो बन्दै गएको छ। यसबाट समाजमा नजानिँदो किसिमले संवादहीनता बढेर गएको छ। जुन सामाजिक उन्नयनका दृष्टिले निकै घातक छ।

**शहरी क्षेत्रका ढललाई पनि यसमा जिम्मेवार मान्न सकिन्छ। पहिले घरेलु प्रयोगका पानी खेतबारीका गरा, पाखा तथा अन्य खुला ठाउँमा छाडिन्थ्यो। अहिले ढलमार्फत सिधै खोलामा पुऱ्याइएको छ। यसबाट एकातिर जमिन रिचार्ज हुने क्रम सुस्ताएको छ भने अर्कोतिर खोलानाला प्रदूषित हुने दर बढेको छ।**



## चुनौतीको पहाड

गाउँ छाडेर शहरतिर बसाइ गर्ने प्रवृत्ति तीव्र गतिमा बढेकाले गाउँमा निर्जनीकरण बढेर गएको छ। यसबाट एकातिर चालु अवस्थामा रहेका धारा, पँधेरा तथा कुवाहरू उपयोगविहीन बन्न पुगेका छन् भने अर्कोतिर नवशहरियाहरूलाई पानीको व्यवस्था गर्नुपर्ने खाँचो बढेको छ। बढ्दो शहरी जनसङ्ख्यालाई पानीको व्यवस्था गर्ने कार्य आर्थिक तथा वातावरणीय दृष्टिले महँगो बन्न पुगेको छ।



केही दशकयता नेपालमा शहरीकरणमा तीव्रता आएको छ। एक तथ्याङ्क अनुसार सन् १९५२ तिर नेपालमा केवल २.९ प्रतिशत जनसङ्ख्या शहरमा बस्थे। सन् २००१ मा शहरमा बस्नेहरूको दर १३.९ प्रतिशत पुग्यो भने सन् २०१४ मा यो दर बढेर २७.२ प्रतिशत पुग्यो।

शहरिया जनसङ्ख्याको वृद्धिसँगै नेपालमा पानीको सङ्कट गहिरिँदै गएको देखिन्छ। शहरको बढ्दो जनसङ्ख्यालाई भू–सतहमा उपलब्ध पानी अपर्याप्त भई भूमिगत पानी अत्यधिक मात्रामा दोहन गरिँदै आएको छ। यसबाट भूमिगत पानीको जलभण्डार (वाटर टेबल) असन्तुलित हुन गई थप समस्या पैदा भएको रिपोर्ट आइरहेका छन्।

नेपालले पानी वितरणमा उल्लेखनीय प्रगति गरिरहेको प्रगति विवरण आइरहँदा तराईका कतिपय ट्युबवेलमा पानी नआएको, पहाडमा पनि पानीका लागि भौतारिनु परेको समस्याबारे समाचारले बेग्लै अवस्था बयान गरिरहेको छ। अहिले जमिनमुनि राम्ररी पानी पुर्नभरण हुन सकिरहेको छैन।

ठाउँ ठाउँमा ठूला ठूला कङ्क्रिट संरचना बनेपछि वर्षाको पानी जमिनमुनि सोसिन पाएको छैन। आधुनिक घर, सडक तथा अन्य मेगा संरचना यसका लागि जिम्मेवार छन्। शहरी क्षेत्रका ढललाई पनि यसमा जिम्मेवार मान्न





सकिन्छ। पहिले घरेलु प्रयोगका पानी खेतबारीका गरा, पाखा तथा अन्य खुला ठाउँमा छाडिन्थ्यो। अहिले ढलमार्फत सिधै खोलामा पुऱ्याइएको छ। यसबाट एकातिर जमिन रिचार्ज हुने क्रम सुस्ताएको छ भने अर्कोतिर खोलानाला प्रदूषित हुने दर बढेको छ।

यतिबेला पानी मुहान सुक्ने समस्या पनि बढेर गएको देखिन्छ। भूमिका थापा, चिरञ्जीवी भट्टराई, ङमिन्द्र दाहाल, सुषमा तिवारी र डिन जेकोब्सनले तयार पारेको एक शोधपत्रमा ७४ प्रतिशत स्थानीय तहमा पानीका मूल सुक्ने र ५८ प्रतिशत मूल सर्ने समस्या उत्पन्न भएको देखाएको छ। त्यसमध्ये सबैभन्दा बढी चुरे क्षेत्रमा ७९ प्रतिशत मुहान सुक्ने समस्या रहेको छ। यसैगरी हिमाली क्षेत्रमा ६४ प्रतिशत र पहाडी क्षेत्रमा ४६ प्रतिशत पानीका मुहान सुक्ने समस्या देखिएको छ।

पानीको मूल सुक्नुका पछाडि विभिन्न पक्ष जिम्मेवार छन्। अध्ययनबाट प्राप्त नतिजा अनुसार पानीको मूल सुक्नुमा सडक तथा संरचना ५१ प्रतिशत, भूकम्प ४६ प्रतिशत, जलवायु परिवर्तन ४५ प्रतिशत, वन फँडानी ३२ प्रतिशत तथा बाढीपहिरो ३० प्रतिशत जिम्मेवार देखिएको छ। पानीको मूल सुक्नाले खानेपानीमा ७६ प्रतिशत, सिँचाइमा ५० प्रतिशत, सरसफाइमा ३६ प्रतिशत तथा पशुपालनमा ३५ प्रतिशत समस्या थपिएको छ। पानीको मूल सुक्नाले ७ प्रतिशत मानिस मौलिक थलोबाट विस्थापित भएको पाइएको छ।

## पानी अर्थतन्त्र

परम्परागत मान्यता अनुसार पानी कुनै व्यापारिक वस्तु होइन। पानी निःशुल्क वितरण गरिने वा हुनु पर्ने वस्तु हो। परम्परागत मान्यता अनुसार पानी बेच्नु अधर्म मानिन्छ। कुनै तिर्खाएको व्यक्तिलाई हरतरहले प्यास मेटाउने वातावरण बनाउनु धार्मिक दृष्टिले उच्चतम मानवीय दायित्व मानिन्छ। यही मूलमन्त्रलाई आत्मसात् गरी विगतमा चौतारीमा पानीको घडा र लोटा राखिएका हुन्थे। पाटीपौवामा पौशाला खडा गरिएका हुन्थे।

अहिले 'उहिलेका कुरा खुइलिए' भने जस्तो हुन गएको छ। हिजोका दिनमा धर्म कमाउने वस्तु मानिएको पानी अहिले व्यापारिक वस्तु हुन पुगेको छ। पानी व्यवसायीले कार्टेलिङ गर्दै ग्राहकको थाप्लोमा अनावश्यक आर्थिक भार थप्ने गरी पानीको भाउ बढाउन तल्लीन भइरहेको समाचार पनि आइरहन्छ। यति मात्र होइन मुट्ठीभर शक्तिशाली खेलाडीले पानीको मुहान कब्जा गरेर पानी जस्तो निःशुल्क रूपमा उपलब्ध हुने प्राकृतिक

स्रोतलाई बेचेर कमाउने धन्दा चलिरहेको खबर पनि आइरहेका छन् ।

विगतमा धर्मात्माहरूले खडा गरेका पौशाला तथा 'धर्मघडा' बिरानो बनिसकेको छ । अहिले पौशाला तथा 'धर्मघडा' को ठाउँ पानीका व्यापारिक ट्याङ्करले लिएका छन् । विगतमा वैशाख अक्षय तृतीयाका दिन 'धर्मघडा' राखिएको चौतारीमा खुदोपानी, जौको सातु खुवाउने चलन थियो । अहिले यी सबै लोकहितैषी गतिविधि पुँजीवादको छायामा परिसकेको छ ।

## उपसंहार

पँधेरो केवल पानीशाला मात्र नभई आफैँमा एउटा जनोपयोगी शास्त्र पनि हो । यसले प्रकृतिसँग मित्रवत् व्यवहार गरी सफा र स्वच्छ पानी उपयोग गर्न सिकाउँछ । नेपालमा पँधेरोशास्त्रको अभ्यास सयौँ वर्षअघिदेखि हुँदै आएको पाइन्छ । विकासका नाममा लाखौँ डलर खर्च गर्ने आधुनिक विकास परियोजनाले गर्न नसकेको पानीको आपूर्ति परम्परागत पानी–पँधेरोले गर्दै आएका छन् ।

विकास परियोजनाको कमजोरीको दृष्टान्तका रूपमा बहुचर्चित मेलम्ची खानेपानी परियोजनालाई लिन सकिन्छ । यस परियोजनाले निलेको समय र धनलाई



नियाल्दा पँधेरोशास्त्रको औचित्य झन् बढेर गएको छ । पँधेरोशास्त्रले तिर्खा व्यवस्थापन र जलाधार व्यवस्थापनका पक्षमा लोकहितैषी पाठ सिकाएको छ । काठमाडौँ उपत्यकाको वैभवशाली ढुङ्गेधारा पँधेरोशास्त्रको जिउँदो–जाग्दो दृष्टान्त हो । ■



भलै यो कुरामा हत्तपत्त विश्वास नलाग्ला तर यसमा सत्यता छ, दक्षिण सुडानका मन्डारी र डिङ्का आदिवासीले गाईको पिसाबद्वारा नुहाउने गर्छन् । गौमूत्रद्वारा त्यसरी नहाउनुको पछाडि उनीहरूको विश्वास के छ भने त्यो 'एन्टिसेप्टिक' हुन्छ । गौमूत्रले नुहाएमा परजीवी र लामुखुट्टेबाट जोगिने विश्वास पनि उनीहरूको छ । ■

*–युवामञ्च*

# जीवनोपयोगी

*– आस्था श्रेष्ठ,*
*डल्लु, काठमाडौँ*

## राम्ररी हात धुने




चिकित्सकको भनाइ अनुसार नियमित हात धुँदा रुघाखोकी, ज्वरो, बसेको घाँटी, पेट दुख्ने र अन्य गम्भीर स्वास्थ्य समस्या फैलाउने रोगाणुबाट जोगिन मद्दत मिल्छ भनी टोरन्टो स्टारले उल्लेख गरेको छ।

त्यही पत्रिकामा अझ यसो भनिएको छ, मोन्ट्रिअलका छाला विशेषज्ञ डा. कुल्यो सोटोका अनुसार राम्ररी हात धुँदा भाइरस र कीटाणुद्वारा सर्ने सङ्क्रामक रोगहरू धेरै हदसम्म कम गर्न सकिन्छ। श्वासप्रश्वाससम्बन्धी रोग ५४ प्रतिशत र झाडापखाला ७२ प्रतिशतले कम गर्न सकिने उनको भनाइ छ।

क्यानेडेली पेडियाट्रिक सोसाइटीको सुझाव अनुसार राम्ररी हात धुन धारामा हात भिजाएपछि एकदेखि ३० सम्म गनुञ्जेल साबुनले माड्नु पर्छ। त्यसपछि एकदेखि पाँचसम्म गनुञ्जेल पानीले पखाल्नु पर्छ र अन्त्यमा अरूले प्रयोग नगरेको सफा रुमाल वा कागजको रुमालले पुछ्ने वा तातो वायु प्रवाह हुने यन्त्रमा हात सुकाउनु पर्छ। भोजनालय, घुमन्ते पसल वा बजारका चमेनागृहमा खाना ओसारपसार गर्ने व्यक्तिले विशेषगरी हात राम्ररी धुन पर्दछ।



## राम्ररी पढ्ने र लेख्ने

क्यानडाको समाचारपत्र ग्लोब एन्ड मेल अनुसार पुस्तक पढेर सुनाउँदा केटाकेटीको लेख्ने दक्षता बढ्छ। हुर्कँदै गरेको उमेरमा कथा सुन्ने विद्यार्थीले परीक्षामा राम्रो अङ्क ल्याएको कुरा ओन्टेरियोको शिक्षा मन्त्रालयद्वारा लिइएको एउटा जाँचबाट देखियो। ग्लोब समाचारपत्रले उल्लेख गरेको छ, राम्ररी पढ्ने विद्यार्थीले राम्ररी लेख्न सके अनि विद्यालयमा बाहेक अन्य समयमा पढ्नेले राम्ररी पढ्न र लेख्न सके।

ओन्टेरियो शिक्षक सङ्घका अध्यक्षका अनुसार जुन विद्यार्थीले १४ वर्षको उमेरसम्म पनि पढ्ने बानी बसाल्दैन वा कसैले उनलाई पढेर सुनाएन भने त्यसपछि पढ्ने बानी बसाल्न सकिँदैन।

## सहानुभूति सिक्ने



केटाकेटीमा सहानुभूति प्रकटको अनुभव पाएमा अरूको भावना बुझ्ने क्षमताबारे जान्न सकिने कुरा अनुसन्धानकर्ताले बताएका छन् । द न्युयोर्क टाइम्समा उल्लेख गरिएको छ, दुर्व्यवहारमा परेका केटाकेटीले दुःखमा परेका अन्य केटाकेटीप्रति सहानुभूति देखाउँदैनन् । तिनीहरूले दुःखमा परेको बच्चालाई देखे पनि उसप्रति कुनै प्रतिक्रिया जनाउँदैनन् वा उसलाई बेस्सरी हकार्छन् या घचेट्छन् ।

जुन बच्चाको भावनाको कदर गरिएको हुन्छ, तिनले अरूका भावनाप्रति बढी सकारात्मक प्रतिक्रिया देखाउँछन् । तसर्थ आमाबाबुले आफ्ना छोराछोरीको भावनालाई सम्मान गर्नुका अतिरिक्त तिनीहरूप्रति सहानुभूतिसमेत प्रकट गर्नु पर्दछ ।



## जनावरका लागि ट्राफिक बत्ती

कहिलेकाहीँ जनावरले बाटो काट्दा सवारीचालक र जनावर दुवैका लागि जोखिम हुन सक्छ। प्रकृतिसम्बन्धी फ्रान्सिसी पत्रिका टेर सोभाजको प्रतिवेदन अनुसार राति जनावरले जङ्गलमा बाटो पार गर्दा अनगन्ती दुर्घटना भएकाले फ्रेन्च नेसनल अफिस अफ फरेस्ट्सका प्राविधिज्ञले एउटा अचम्मको कुरा पत्ता लगाएका छन्। रातो बत्ती देखेपछि जनावर रोकिन्छन्।

परीक्षणले देखाए अनुसार रातो बत्तीको प्रकाश तरङ्गले जनावरलाई केही समयका लागि निष्क्रिय बनाउँछ। यसै कारण फ्रान्सका जङ्गल हुँदै जाने सडकको छेउमा रातो परावर्तक राखिएका छन् र तिनले विपरीत दिशाबाट आएका गाडीको बत्तीलाई जङ्गलतिर परावर्तित गरिदिन्छन्। जसले गर्दा सडकमा आउनुअघि जनावर त्यो बत्ती नहराउञ्जेल पर्खेर बस्छन्।





## हाँस्ने धेरै बाँच्ने

हाँस्नु स्वास्थ्यका लागि फाइदाजनक छ भन्ने स्पष्टै छ। स्टेट युनिभर्सिटी अफ न्युयोर्कका वैज्ञानिकले हाँस्दा मानिसको रोग प्रतिरोधक क्षमतालाई क्रियाशील बनाउने शक्तिशाली हार्मोन सक्रिय हुन थाल्ने पत्ता लगाएका छन्। साइटोकिन्स भनिने एक प्रकारको हार्मोनले सेतो रक्तकोषको कार्यक्षमता बढाउँछ। सेतो रक्तकोषले विषाणु र कीटाणुबाट हुने सङ्क्रमण रोक्न सहयोग गर्दछ। यसले क्यान्सर गराउन सक्ने कोषलाई समेत नाश गर्छ।

लन्डनको द सन्डे टाइम्सका अनुसार हाँस्दा रगतमा बढ्ने तत्त्वमध्ये साइटोकिन्स पनि एक हो। हाँस्नु र साइटोकिन्सबीचको सम्बन्धले गर्दा केही अनुसन्धानकर्ता यसलाई आनन्दित हार्मोन पनि भन्छन्। ■



# हरिहर विरही
वरिष्ठ पत्रकार

हरिहर विरही प्रजातान्त्रिक आन्दोलनका क्रममा विद्यार्थी जीवनदेखि नै सक्रिय राजनीतिमा होमिएको नाम हो । २०२६ सालदेखि नै नेपाली कांग्रेसमा आबद्ध भएर तीन वर्ष निर्वासन र पटक पटक गरी पाँच वर्ष जेल जीवन भोगेका विरही २०३८ सालयता भने पत्रकारितालाई व्यावसायिक रुपमै अँगालेर 'साप्ताहिक विमर्श' को सम्पादकका रुपमा चर्चित छन् । नेपाल पत्रकार महासङ्को सभापति (२०५१ साल) एवं प्रेस काउन्सिल नेपालको अध्यक्ष (२०५५ साल) जस्तो गरिमामय जिम्मेवारी सम्हालिसकेका विरहीले पत्रकारितासम्बद्ध थुप्रै पुरस्कार र सम्मान प्राप्त गरेका छन् । समसामयिक राजनीतिक टिप्पणीकारका रुपमा चर्चित विरहीको संस्मरणात्मक कृति 'आगो निभेको छैन' (२०७३) प्रकाशित छ ।

हरिहर विरही अध्ययनशील पत्रकार हुन् भन्ने उनकै वाक्यांश 'पुस्तक नभएको भए सायद म बहुलाउँथेँ' ले पुष्टि हुन्छ । उनी भन्छन्, "पुस्तक भनेको कोरा कागजमा लेखिएका अक्षरको बगर मात्र होइन । यो एउटा यस्तो माध्यम हो, जसले मानिसलाई जीवन र जगत्‌को, मनुष्य र समाजको अन्तरकुन्तर छाम्न तथा आफूले देखे नदेखेका संसार र सत्यलाई बुझ्न र बुझाउन सारथिको काम गर्दछ । यसले मानिसलाई आफूभित्र रहेका भाव, विचार, क्षमता र प्रतिभाको बीजलाई अङ्कुरित, पुष्पित, पल्लवित र सुगन्धित बनाउन ठूलो सहयोग पुऱ्याउँछ । पुस्तक मानिसको साथी र सल्लाहकार पनि हो ।"

उनी लोकतान्त्रिक आन्दोलन तथा पत्रकारिताको क्रममा निर्वासन र जेलमा बस्दा पुस्तक नै एक मात्र साथी थियो भन्छन् । जेलमा भेट्न आउनेले "के चाहिएको छ" भनेर सोद्धा पुस्तक ल्याइदिन भन्ने गरेको स्मरण गर्छन् । "पुस्तक जस्तो भए पनि समुद्रभित्रको बहुमूल्य मोती भेटाएजस्तो लाग्थ्यो । जेलरले सेन्सरको नाममा पुस्तक रोकेर राख्दा रातभरि निद्रा लाग्दैनथ्यो । यस्तो अवस्थामा पुस्तक पढ्न नपाएको भए सायद म बहुलाउने थिएँ," उनी भन्छन् । पुस्तक नभएको भए समाज र सभ्यताको यस रुपमा विकास हुन सम्भव थिएन भन्ने विरही मानिसले गरेको उद्यम र विकास परको कुरा थियो भन्छन् । पछिल्लो समयमा नवीन प्रविधिले किताबलाई विस्थापित गर्ने हो कि भन्ने आशङ्का गर्न थालिएको छ तर पुस्तक हातमा लिएर पाना ओल्टाइपल्टाई गर्दै पढ्नुको मज्जा अन्य प्रविधिबाट प्राप्त नहुने उनको अनुभव छ । निवासमा पुस्तकालय नै खडा गरेका विरहीले पछिल्लो समयमा पढेका पाँच पुस्तकका बारेमा गरेको टिप्पणी :

## राष्ट्र–परराष्ट्र




डा. भेषबहादुर थापाको आत्मकथानात्मक 'राष्ट्र–परराष्ट्र' पत्रकार हरिबहादुर थापाद्वारा सम्पादित कृति हो । यो पुस्तकमा डा. थापाले युवावस्थादेखि अहिलेसम्म स्वदेश तथा विदेशमा विभिन्न महत्त्वपूर्ण पदमा रहेर गरेका कामको जानकारी दिइएको छ । अमेरिकामा अध्ययन गर्दागर्दै नेपालमा महत्त्वपूर्ण नियुक्तिका लागि निम्त्याइएका थापाले राष्ट्रिय योजना आयोगको सचिव, उपाध्यक्ष, गभर्नर, अर्थमन्त्री, अमेरिका र भारतको राजदूत, परराष्ट्रमन्त्रीलगायतका पदमा नियुक्त हुँदाको पृष्ठभूमि र ती जिम्मेदारीको क्रममा निर्वाह गरेको भूमिका रोचक शैलीमा पस्किएका छन् । पञ्चायतकालीन दस्तावेजका रूपमा आएको पुस्तक पठनीय छ ।

## ओशोको मूलभूत मानव अधिकार




प्रारम्भमा रजनीश नामले चिनिएका चर्चित विचारक ओशोले मानव अधिकारबारे दिएको प्रवचनको सङ्कलन हो यो । ओशोका करिब दुई हजार पुस्तक प्रकाशित छन् । ती सबै उनका प्रवचनको सङ्ग्रह हो । उनका हरेक पुस्तक पठनीय र विचारोत्तेजक हुन्छन् । अत्यन्त उदार सोचाइ, अग्रगामी चिन्तन तथा सम्पूर्ण स्वतन्त्रताको पक्षधरता र आफ्नै प्रकारको जीवनशैलीका कारण सधैँ चर्चित र विवादास्पद रहेका ओशोले मानव अधिकारको सन्दर्भमा गरेको व्याख्या र परिकल्पना मननीय छ ।

## मैले चिने–जाने–बुझेका प्रदीप गिरि




प्रदीप गिरि नेपाली राजनीतिक क्षेत्रको जाज्वल्यमान नक्षत्र, बहुमुखी प्रतिभाशाली बौद्धिक व्यक्तित्व र समाजवादी चिन्तक थिए । राजनीतिज्ञ भएर पनि साहित्य, कला, संस्कृतिलगायत विविध विधाको त्यति धेरै ज्ञान भएको व्यक्ति अर्को विरलै होला । उदार चिन्तन र व्यवहार, सहज र सरल शैली, निश्छल, निर्भीक र निस्वार्थी हुनुका साथै बौद्धिक क्षमतायुक्त उनको प्रशंसा नगर्ने कोही छैन । उनले सामाजिक न्याय, समतामूलक समाज तथा लोकतन्त्रप्रतिको निष्ठामा अर्पित गरेको समग्र व्यक्तित्व झल्किने 'स्मृतिग्रन्थ' पठनीय र सङ्ग्रहणीय छ ।

## योगमाया




योगमाया न्यौपाने दन्त्यकथाकी पात्र जस्तै लाग्छिन् । राणा शासनको अन्धकारमय समयमा सामाजिक विभेद, सतीप्रथालगायतका कुरीति र प्रशासनिक ज्यादतीविरुद्ध नारी स्वतन्त्रतासहित विभिन्न प्रगतिशील माग राख्दै त्यसका लागि महिलालाई सङ्गठित गर्ने भोजपुर, दिङ्लाकी अग्रणी क्रान्तिकारी नारी हुन् । योगसाधिका योगमाया साहस र असीमित ऊर्जाकी प्रतिमूर्ति मानिन्छिन् । साधना, स्वतन्त्रता र जागरण अभियानमा जीवन समर्पित गरेकी योगमायाले अन्ततः ६८ जना आफ्ना अनुयायीसहित अरुण नदीमा जलसमाधि लिएको इतिहाससमेत समेटिएको उपन्यासकार नीलम कार्की निहारिकाको यो कृति निकै चर्चित छ । यस कृतिले २०७५ सालमा मदन पुरस्कारसमेत प्राप्त गरेथ्यो ।

## मनु




विद्वान् व्यक्तित्व डा. देवीप्रसाद सुवेदीको पछिल्लो समयमा प्रकाशित उपन्यास 'मनु' ले निकै चर्चा पाउन सफल भयो । वैदिककालीन सामाजिक एवं सांस्कृतिक परिवेशमा आधारित यस उपन्यासलाई मदनमणि दीक्षितको 'माधवी' पछिको वैदिक तथा पौराणिक कथावस्तुमा आधारित कृति मानिएको छ । 'मनु' आदिमानव हुन् र उनकै सेरोफेरोमा कथावस्तु रहेको छ । ■

*– प्रस्तुति : तुलसीहरि कोइराला*

# काजुको जङ्गल

■ दीक्षा कोइराला

दुई पाटा आपसमा जोडिएको, ठूलो सिमी जस्तो बाङ्गो आकारको, सेतो मसलेदार फल मन नपराउने कोही होलान् जस्तो लाग्दैन । यसको नाम भनियो भने सुन्नासाथै 'आहा !' भनिहालिन्छ ।



यति मिठो चिज अनेक मिश्रण गरेर मान्छेले बनाएको हो कि आफैँ यस्तै फलेको होला भन्ने जिज्ञासा धेरैमा हुनुपर्छ । हो त, मलाई पनि केही वर्षअघिसम्म यस्तै लाग्थ्यो । जब २०७३ सालको वैशाखमा भारतको पर्यटकीय शहर गोवा भ्रमणको अवसर मिलेथ्यो, त्यतिबेला पो आफूलाई औधि मनपर्ने काजुको जङ्गल देखेर छक्क परेथेँ ।

मुम्बैबाट गोवा जाँदा आउँदा बाटोमा पर्ने बाक्लो जङ्गल त काजुको पो रहेछ । ठूला ठूला रुखमा फलेको काजु हेर्न औधि मन लागेपछि चालकलाई सडक छोडेर भित्री बाटोतर्फ गाडी मोड्न लगाएथ्यौँ ।





भित्री सडक पस्ने मोडमा प्रशस्तै साइनबोर्ड देखिन्थे। 'काजुका कारखाना यहाँ से दो किलोमिटर दूर,' 'ज्यादा दूर नही है काजु फ्याक्ट्री,' 'फ्याक्ट्री मे सस्ता मिलेगा'। यस्ता साइनबोर्डले काजु फ्याक्ट्री हेर्ने मोह जगाइरहेथे।

रुखमा फल्ने फलको कारखाना किन चाहियो ? स्वाभाविक जिज्ञासा हो तर जब रुखबाट आफैँले झारेर खोललाई फुटाएर काजु निकाल्न खोज्दा नसकेपछि भने छक्क लागेथ्यो।

ढुङ्गाले फुटाउँदा धूलो होला भन्ने चिन्ता, हातले नफुट्ने भएपछि दाँतले टोकेर फुटाउने विचारले टोक्न मात्र के लागेथेँ, नजिकै भएको गाडी चालक चिच्यायो "मत काटो, जिभ जलेगी !"

पहिले त उसले के भन्न खोजेको हो भन्ने नै बुझिनँ तर उसले नटोक्नलाई रोकेको हो भन्ने चाहिँ बुझेँ। उसले भन्दै गर्दा मैले टोकिसकेकी थिएँ। झट्ट मुखबाट निकालेँ।

उसले वास्तवमा मलाई बेलैमा सावधान गराएछ। नत्र त जिब्रो परपऱ्याएर पूरै लाटो हुने रहेछ। थोरै मात्र दाँत गाड्दा पनि जिब्रो र ओठ पोल्न थालिसकेका थिए। त्यो परपराइ करिब एक हप्तासम्मै रहेथ्यो।

उसले टोकेर काजु फुटाउनबाट रोकेर ठूलै उपकार गरेछ भन्ने लागिरहेको छ।

रुखका फेदफेदमा पाकेर झरेका काजु थिए। केही टिपेर बोक्यौँ तर धेरै टिप्नलाई त डर भयो। अर्काको मुलुकमा गाली पो गर्ने हुन् कि भन्ने भयो। केवल हेर्नका लागि मात्र बटुलेथ्यौँ।

निकै अग्ला थिए काजुका रुख। लगभग हाम्रो रुखकटहर र वर जस्ता। नजिकैको साइनबोर्डमा दुई किलोमिटर भित्र काजु फ्याक्ट्री रहेको लेखिएको थियो। यहाँसम्म आइपुगेपछि हेरौँ न त, फ्याक्ट्री कस्तो हुँदोरहेछ, कसरी यस्तो कडा खोलबाट निकाल्दो रहेछ, कसरी भुट्दो रहेछ, अनि प्राकृतिक रूपमै यस्तो मिठो हो कि अन्य केही मिठास मिसाइँदो हो, जस्ता खुलदुली मेट्न पनि कारखाना हेर्नैपर्ने भयो।



दुई किलोमिटर त लेखिएको मात्र रहेछ। गाडीले दुई, तीन किलोमिटर पार गरेपछि फेरि अर्को साइनबोर्ड देखियो 'काजु फ्याक्ट्री ज्यादा दूर नही है।' तर गाडीको इन्डिकेटरले दस किलोमिटरभित्र गुडेको देखाउँदा पनि फ्याक्ट्री नआएपछि हामी परिवार नै डरायौँ। भारतीय गाडी, भारतीय चालक, भारतीय भूमि, जङ्गलभित्र यति टाढा ! ओहो, जे पनि हुन सक्छ।

कतै फ्याक्ट्री नै नभएर झुक्याएर लुटपाट गर्नका लागि पो यस्तो लेखेको हो कि ? होइन भने त दुई किलोमिटर लेखेकोमा दस किलोमिटर जाँदा पनि फ्याक्ट्री नआउनुको कारण के त ?

फ्याक्ट्री हेर्ने इच्छा मारेर गाडी घुमाउन लगायौँ। फेरि कुनै अवसर मिलेछ भने हेरौँला भन्ने लगिरहेकै छ।

काजुको सिङ्गो दाना पाकेपछि ल्यात्याक्क हुने रहेछ। त्यसभित्र कडा खोलमा गुदी हुने रहेछ।

हेलियोब्याक्टर पायलोरी ब्याक्टेरियाका कारणले पेटमा अल्सर विकास हुने कुरामा बेरी मार्सल विश्वस्त थिए तर उनको कुरामा कसैलाई विश्वास थिएन। उनको सिद्धान्तलाई मानिसमा परीक्षण गर्न मनाही भएका कारणले उनले आफैँले हेलियोब्याक्टर पायलोरी ब्याक्टेरिया भएको तरल पदार्थ पिए। अनि केही दिनमै उनको पेटमा अल्सर विकास भयो। उनले एन्टिबायोटिक्सद्वारा त्यसको उपचार गरे र अन्ततः सन् २००५ मा उनलाई यस शोधमा नोबेल पुरस्कार प्राप्त भयो। ▪

*-युवामञ्च*



‘एनाकार्डियल अक्सिडेन्टल’ वानस्पतिक नाम भएको काजु उष्ण हावापानी भएको क्षेत्रमा हुने मसलेदार फल रहेछ । भारत पनि काजु उत्पादनका लागि प्रसिद्ध नै रहेछ ।








यसलाई निकालेर खान बाँदरले पनि सक्ने रहेनछ । त्यही भएर जङ्गलमा बाँदरका फौज नाचिरहेका थिए र पनि काजु सुरक्षित थियो ।

बाँदरका हातमा नरिवल भन्थे । मलाई त बाँदरका हातमा काजु भनेर पनि थप्न मन लागेको छ ।

गाडी फिर्काएपछि काजुको बारेमा गुगल सर्च गर्न मन लाग्यो । ‘एनाकार्डियल अक्सिडेन्टल’ वानस्पतिक नाम भएको काजु उष्ण हावापानी भएको क्षेत्रमा हुने मसलेदार फल रहेछ । भारत पनि काजु उत्पादनका लागि प्रसिद्ध नै रहेछ ।

काजु अनेक गुणकारी फल हो भन्ने त जानेकै हौँ । काजुबाट अल्कोहल (रक्सी) पनि बनाइँदो रहेछ । गोवामा पाइने फिनी नामको काजुको रक्सी निकै प्रसिद्ध रहेछ । गोवा घुमेर फर्किनेले साथमा लिएर आउने भए पनि बाटोमा रहेको प्रहरी पोस्टले खानतलासी गरेर ल्याउन नदिने रहेछ ।

त्यसरी निकालेर बाटोमुनि फ्याँकिएका बोतल र सिसीको डुङ्गुर लागेको देखिन्थ्यो । धन्न हामीले ल्याएको दुई बोतल फिनी चालकले बठ्याइँ गरेर लुकाइदिएथ्यो । प्रहरीले तलासी गर्दा पनि भेटाएन र ल्याउन पाइयो । ■

टिपन टापन

■ बद्रीप्रसाद घिमिरे





क्याटफिस, जफिस र कार्डिनल प्रजातिका माछाले मुखमा अण्डा कोरलेर भुरा उत्पादन गर्छन्। खासगरी भाले माछाले। भुरा जन्माइसकेपछि तिनको रेखदेखको जिम्मा भाले माछाको हुन्छ।

शुक्र यस्तो ग्रह हो जसलाई हरबखत घना बादलले ढाकेको हुन्छ। शुक्र ग्रहमा देखिने बादल जलवाष्पबाट नभई सल्फ्युरिक एसिडबाट बनेको छ।। त्यहाँको वायुमण्डलमा मुख्यतः कार्बनडाइअक्साइड छ। यसरी शुक्र ग्रहको बादल र वायुमण्डलले सूर्यको तापलाई छेक्छ। शुक्र सबैभन्दा तातो ग्रह हो। यसको सतहको तापक्रम नै ४५० डिग्रीभन्दा बढी हुन्छ।



मान्छेपिच्छे कपालको बनोट र घनापन फरक हुन्छ। कसैको कपाल नरम र रेशमी हुन्छ भने कसैको खस्रो र बाक्लो। कपाल उम्रिने या बढ्ने दर पनि फरक फरक हुन्छ। कपालले जराबाट पोषण प्राप्त गर्छ। कपालको जरामा कोष हुन्छन्। जसमा रोगन रहेको हुन्छ।
कपालको ठुटा सँगसँगै कोषहरू बढ्दै जान्छन्। कोषहरू मर्छन् तर रोगनको कण कपालसितै रहन्छ। कपालको ठुटा गोलो, अण्डाकार या चेप्टो आकारको हुन्छ। कपालको बनोट र आकार यसैमा निर्भर गर्छ। गोलो आकारको ठुटाले ठाडो र खस्रो कपाल उत्पादन गर्छ भने अण्डाकार ठुटाले घुम्रिएको कपाल उत्पादन गर्छ। ■






# डिजिटल बैङ्क र डिजिटल करेन्सी

नेपालमा अहिले जति पनि बैङ्क छन् ती भौतिक रूपमा सञ्चालनमा छन् । यस्ता बैङ्कको सेवा लिन सेवाग्राही भौतिक रूपमै बैङ्कमै उपस्थित हुनुपर्छ । नेपालमा पनि डिजिटल बैङ्कको चर्चा चलिरहँदा डिजिटल बैङ्क कस्तो हुन्छ भन्ने सबैलाई चासोको विषय बनेको छ ।



■ अजय शर्मा

अन्तर्राष्ट्रिय अभ्यास हेर्ने हो भने विश्वका धेरैजसो देशमा डिजिटल बैङ्क प्रचलनमा आइसकेका छन् । डिजिटल बैङ्कको ऋण प्रवाह, निक्षेप सङ्कलन तथा अन्य सबै सेवा अनलाइनबाट सञ्चालन हुन्छ । यस्ता बैङ्कले एउटै शाखाबाट देशभर सेवा दिन सक्छन् । डिजिटल बैङ्कको सेवा लिन बैङ्कको केन्द्र वा शाखा कार्यालय धाउनु पर्दैन ।



यस्ता बैङ्क सूचना प्रविधिमा बढी केन्द्रित हुन्छन् । नेपालमा सञ्चालनमा रहेका बैङ्कले पनि डिजिटल बैङ्किङसम्बन्धी केही सेवा दिँदै आएका छन् तर डिजिटल बैङ्क र डिजिटल बैङ्किङ भनेको एकदमै फरक कुरो हो ।

डिजिटल बैङ्कबाट ऋण प्रवाह, निक्षेप सङ्कलन तथा अन्य सेवा पनि अनलाइनबाट हुन्छ । यस्तो बैङ्कबाट सेवा लिन सेवाग्राहीले बैङ्कमा धाउन पर्दैन । यसो भनिरहँदा अहिलेका बैङ्कले पनि डिजिटल भुक्तानी, अनलाइन सेवालगायतका डिजिटल सेवा दिइरहेका छन् र भन्ने प्रश्न आउन सक्छ तर अहिले नेपालमा सञ्चालनमा रहेका बैङ्कले सीमित डिजिटल बैङ्किङ सेवा दिँदै आएका छन् ।

डिजिटल बैङ्कले सबै सेवा अनलाइनबाट दिन्छन् । साथै यस्ता बैङ्कका शाखा कार्यालय जताततै हुँदैनन् । यसरी शाखा कार्यालय कम हुँदा बैङ्कको सञ्चालन खर्चमा कमी आउँछ । नेपालका लागि भने यस्तो बैङ्कको अभ्यास नौलो हुन्छ ।

## कानुनी व्यवस्था

हालसालै प्रतिनिधि सभामा पेस गरिएको 'बैङ्क तथा वित्तीय संस्थासम्बन्धी ऐन २०७३' संशोधन प्रस्ताव विधेयकले डिजिटल बैङ्क र डिजिटल मुद्राको अवधारणा अघि सारेको छ । नेपालमा पहिलो पटक यस्तो प्रावधानसहितको अवधारणा आएको हो । संशोधन गर्न पेस भएको यस विधेयकको मूल ऐनको दफा ४९ 'क' थप गर्दै उक्त अवधारणा अघि सारिएको छ ।

जस अनुसार संशोधनका लागि पेस भएको विधेयक जस्ताको त्यस्तै पास भएमा अहिले नेपालमा सञ्चालनमा रहेका बैङ्क/वित्तीय संस्थाले थप सुविधा लिएर वा नयाँ लाइसेन्स लिएर खडा हुने डिजिटल बैङ्कले बैङ्किङ तथा वित्तीय कारोबार गर्न सक्ने छन् ।

"मूल ऐनमा दफा ४९ 'क' थपः मूल ऐनको दफा ४९ पछि देहायको

**संशोधनका लागि पेस भएको विधेयक जस्ताको त्यस्तै पास भएमा अहिले नेपालमा सञ्चालनमा रहेका बैङ्क/वित्तीय संस्थाले थप सुविधा लिएर वा नयाँ लाइसेन्स लिएर खडा हुने डिजिटल बैङ्कले बैङ्किङ तथा वित्तीय कारोबार गर्न सक्ने छन् ।**

दफा ४९ 'क' थपिएको छ : ४९ 'क' डिजिटल बैङ्कले बैङ्किङ तथा वित्तीय कारोबार गर्न सक्नेः यो ऐन, अन्य प्रचलित कानुन, प्रबन्धपत्र र नियमावली तथा राष्ट्र बैङ्कले तोकेको सीमा, सर्त निर्देशनको अधीनमा रही डिजिटल बैङ्कले राष्ट्र बैङ्कले तोकेबमोजिमको निक्षेप लिने, कर्जा प्रवाह गर्नेसमेतका बैङ्किङ तथा वित्तीय कारोबार गर्न सक्ने छ," संशोधनका लागि पेस भएको विधेयकमा उल्लेख छ। डिजिटल मुद्राको प्रयोग र प्रवर्धनका लागि यो नयाँ व्यवस्था प्रस्ताव भएको हो।

**नेपाल राष्ट्र बैङ्कका अनुसार डिजिटल करेन्सी भनेको सेन्ट्रल बैङ्ककै करेन्सी हुने छ।**




यस्तै नेपाल सरकारले डिजिटल बैङ्क स्थापना गर्न बजेटमा नै व्यवस्था गरेको छ। सो व्यवस्थालाई पूर्णता दिन ऐनलाई संशोधन गर्ने निर्णय गरिएको छ। पछिल्लो समय बैङ्क तथा वित्तीय संस्था 'मर्जर' मा गइरहेको समयमा डिजिटल बैङ्क कस्तो हुन्छ भन्ने सबैलाई चासो छ। बैङ्क तथा वित्तीय संस्थाको लाइसेन्स दिने र नियमन गर्ने निकाय भनेको नेपाल राष्ट्र बैङ्क हो।

## डिजिटल करेन्सी

डिजिटल करेन्सी नेपालका लागि एकदमै नौलो विषय हो। डिजिटल करेन्सी कस्तो हुन्छ भन्ने सबैको चासो रहेको छ।

नेपाल राष्ट्र बैङ्कका अनुसार डिजिटल करेन्सी भनेको सेन्ट्रल बैङ्ककै करेन्सी हुने छ। विश्वमा धेरैजसो देशमा केन्द्रीय बैङ्कले पाइलट प्रोजेक्टका रूपमा डिजिटल करेन्सी ल्याएका छन्। नेपालका लागि निकै नौलो विषय भए पनि कतिपय देशमा डिजिटल करेन्सी पूर्ण रूपमा कार्यान्वयनमा आइसकेको छ।

यही विषयमा नेपालमा समेत राष्ट्र बैङ्कले डिजिटल करेन्सीको अवधारणा ल्याएको छ। नेपालमा ल्याउने भनिएको डिजिटल करेन्सी राष्ट्र बैङ्कले ल्याउने मुद्रा हो। सो करेन्सीमा राष्ट्र बैङ्कको 'ब्याकअप' र नियन्त्रण रहन्छ।

**नयाँ बैङ्किङ प्रणाली अर्थात् डिजिटल बैङ्क र डिजिटल करेन्सीको बहस उठ्दै गर्दा यसको आवश्यकता, पूर्वाधार, सुरक्षालगायतका विषयमा व्यापक बहस र तयारी आवश्यक देखिन्छ ।**






राष्ट्र बैङ्कका अनुसार अहिले भौतिक रूपमा प्रयोग भइरहेको करेन्सी डिजिटल हुने छ ।

नेपालमा तत्काल डिजिटल करेन्सी प्रयोगमा आउने छैन । सन् २०२६ मा पाइलट प्रोजेक्टका रूपमा अघि बढाउने गरी काम भइरहेको राष्ट्र बैङ्कले बताएको छ ।

सामान्य रूपमा बुझ्नु पर्दा डिजिटल बैङ्क भन्नाले विद्युतीय माध्यमबाट सबै बैङ्किङ सेवा उपलब्ध गराउनु हो । यस्तो बैङ्कमा पैसा जम्मा गर्नेदेखि कर्जा लिनेसम्मका सबै प्रक्रिया अनलाइनबाट हुने गर्छन् । यसो हुँदा ग्राहक कुनै पनि कामका लागि बैङ्कमा भौतिक रूपमा उपस्थित हुनु पर्दैन । यस्तै नेपालमा भौतिक पैसाको सट्टा पूर्ण रूपमा डिजिटल करेन्सीको पनि अवधारणामा काम भइरहेको कुरा माथि चर्चा गरिसकियो ।

नेपालमा कानुनी रूपमा डिजिटल पेमेन्टको सुरुवात भएको धेरै भएको छैन । यसलगत्तै डिजिटल बैङ्क र डिजिटल करेन्सीको अवधारणा आउनु आफैँमा सुखद पक्ष हो तर नयाँ प्रविधि ल्याउँदा आमजनताको आवश्यकता हो वा होइन, साइबर र डाटा सुरक्षाको दृष्टिले नेपाल निकै जोखिमको अवस्थामा रहेको समयमा के यस्ता सेवा पूर्ण रूपमा सुरक्षित हुन्छन् त ? भन्ने प्रश्न उठ्नु स्वाभाविक हो । यसो भनिरहँदा हामी नयाँ प्रविधिमा जानै हुन्न भन्ने पनि होइन । नयाँ बैङ्किङ प्रणाली अर्थात् डिजिटल बैङ्क र डिजिटल करेन्सीको बहस उठ्दै गर्दा यसको आवश्यकता, पूर्वाधार, सुरक्षालगायतका विषयमा व्यापक बहस र तयारी आवश्यक देखिन्छ । ■

# चरम सङ्कटमा हैटी





रामप्रसाद आचार्य

क्यारिबियन क्षेत्रको एक गरिब मुलुक हैटी चरम सङ्कटमा फसेको छ। तीन वर्षअघि सन् २०२१ को जुलाईमा बन्दुकधारी समूहले त्यहाँका राष्ट्रपति जोभेनेल मोइजको हत्या गरेपछि अहिलेसम्म निर्वाचित नेतृत्व आउन नसकेकाले हैटीमा अस्थिरता छ।

अहिले निर्वाचित राष्ट्रपतिको माग गर्दै बन्दुकधारी समूहले राजधानी पोर्ट–अ–प्रिन्स कब्जा गरेका छन्। राजधानीमा कर्फ्यु र एक महिनाका लागि सङ्कटकाल लागू गरिएको छ। मुलुक सम्हाल्न नसकेपछि अन्तरिम प्रधानमन्त्री एरियल हेनरीले राजीनामा घोषणा गरेका छन्।

कैयौँ सातादेखि चुलिँदो दबाब र बढ्दो हिंसापछि प्रधानमन्त्री हेनरीले राजीनामाको घोषणा गरेसँगै नयाँ सङ्क्रमणकालीन सरकार बनाएर छिटोभन्दा छिटो चुनाव गराउने विषयमा क्यारेबियन क्षेत्रका नेताहरूले जमैकामा छलफलसमेत गरे। हेनरीले जमैकाबाट राजीनामा घोषणा गरेका हुन्।

सन् २०२१ को जुलाईमा राष्ट्पति मोइजको हत्या भएपछि उनले अन्तरिम हैसियतमा देशको नेतृत्व गर्दै आएका थिए। उनले समयमै चुनाव गरी नेतृत्व हस्तान्तरण गर्न भने सकेनन्। सुरक्षा



व्यवस्थालाई कारण देखाउँदै बारम्बार चुनाव सार्दै आएकोमा उनको चर्को विरोध हुँदै आएको थियो ।

बन्दुकधारीले यतिखेर राजधानी पोर्ट–अ–प्रिन्सका सडक कब्जा गरेका छन् भने त्यहाँको मुख्य जेलमा आक्रमण गरी हजारौँ बन्दी भगाएका छन् । उनीहरूले निर्वाचित नभएका प्रधानमन्त्री हेनरीको राजीनामा माग गर्दै आएका थिए ।

हैटीको सुरक्षा निकायले मुलुकमा सुरक्षा व्यवस्था कायम गर्न नसक्ने देखिएकाले अब छिट्टै त्यहाँ अन्तर्राष्ट्रिय सुरक्षा बल परिचालन गरी सङ्क्रमणकालीन सरकार गठन गरिने भएको छ । देश बाहिरबाट यस्तो तयारी गरिए पनि राजधानीमै अराजकता फैलिएकाले कसरी शान्ति सुरक्षा पुनर्बहाली गर्ने मुख्य चिन्ताको विषय बनेको छ । सशस्त्र समूहसँग वार्ता गरी परिस्थितिलाई सहज नबनाएसम्म अगाडि बढ्न सक्ने अवस्था छैन ।

सानो यो मुलुकको राजधानी पोर्ट–अ–प्रिन्सस्थित निवासमै राष्ट्रपति मोइजको सन् २०२१ को जुलाई ७ मा हत्या गरिएसँगै पुनः दुर्दिन सुरु भएको थियो । २८ जनाको बन्दुकधारी समूहले उनको निवासमै आक्रमण गरी हत्या गरेपछि त्यहाँ सङ्कटकाल लागू गरियो । २८ जना बन्दुकधारीमध्ये २६ जना कोलम्बियाली र दुई जना अमेरिकी थिए । मोइजको हत्या किन गरियो भन्ने कुरा रहस्यमै छ । मोइज संविधान संशोधन गरी देशमा सुधार गर्ने पक्षमा थिए । अनुदारवादीलाई यो कुरा मन परेको थिएन ।

त्यसपछि तत्कालका लागि अन्तरिम प्रधानमन्त्री क्लाउड जोसेफले कार्यकारी अधिकार लिए । पछिल्लो समय हैटीमा राजनीतिक विवाद बढ्दै गएको थियो । मोइजले आफ्नो हत्या हुनुभन्दा दुई दिनअघि मात्रै नयाँ प्रधानमन्त्रीका रूपमा एरियल हेनरीलाई नियुक्त गरेका थिए तर उनले शपथ लिन पनि पाएनन् ।

परिस्थिति केही सहज भएपछि हेनरीले अन्तरिम प्रधानमन्त्रीका रूपमा काम सुरु गरे । उनले छिटोभन्दा छिटो चुनाव गराउने बताए पनि त्यसपछिका दिन अनुकूल बन्न सकेनन् ।

अश्वेत जातिको पहिलो गणतान्त्रिक मुलुक बनेको हैटीमा ६० प्रतिशत जनता गरिबीको रेखामुनि छन् । यो मुलुकले राजनीतिक अस्थिरता, हिंसा, हत्या, भ्रष्टाचार, कुशासन, विदेशी हस्तक्षेप, विभाजन, प्राकृतिक विपत्तिको सामना गर्दै आएको छ । जनतालाई त्यहाँ कहिल्यै पनि सुविस्ता भएन । गरिबी, बेरोजगारी प्रमुख समस्या बनेको छ । मुलुक हाँक्ने राम्रो शासक पाउन नसक्दा जनताले दुःख पाएका छन् । यहाँ राजनीतिक दाउपेच, सत्ता स्वार्थमा सधैँ नेतृत्व केन्द्रित रह्यो । देश र जनताको

## ह्याङओभर हटाउने चक्की

बेलायतले रक्सीको ह्याङओभर हटाउने चक्की बनाएको छ । रक्सीका पारखीहरूले यो चक्की निकै मन पराएका छन् । यो चक्की रक्सी सेवन गर्नुअघि खाइन्छ । बेलायतमा यसको बिक्री सुरु भएको छ । बिक्री सुरु हुनुअघि बेलायतमा यसको परीक्षण गरिएको थियो ।

पिएको रक्सीमध्ये ७० प्रतिशतलाई यो चक्कीले ६० मिनेटभित्रमा शरीरभित्रै नष्ट गरी कलेजोसम्म पुग्न दिँदैन । शाकाहारी तथा शतप्रतिशत प्राकृतिक उत्पादनका रूपमा रहेको यो चक्कीले पेटमा ब्यासिलस कोगुलान्स तथा ब्यासिलस सबटिलिस ब्याक्टेरियाका

पक्षमा काम भएन। अहिलेसम्म पाँच जना शासकको हत्या भइसकेको छ।

सन् १४९२ मा क्रिस्टोफर कोलम्बसले यो टापु पत्ता लगाएका थिए। उनले यसलाई सानो स्पेनको नाम दिए। सन् १६९७ देखि यो मुलुक फ्रान्सको अधीनमा गयो।

सन् १८०४ मा जेन ज्याक डेसालिनको नेतृत्वमा हैटी स्वतन्त्र भयो। डेसालिनले आफूलाई राजा घोषित गरे। उनले दुई वर्ष पनि राज गर्न पाएनन्। सन् १८०६ मा उनको हत्या गरियो। डेसालिनले स्वतन्त्र बनाएको मुलुक विभाजित भयो। सन्







साथै एल सिस्टाइन एमिनो एसिड र भिटामिन बी १२ लाई सक्रिय बनाउँछ। यसले पिएको रक्सीमध्ये ७० प्रतिशतलाई कलेजोमा पुग्नुअघि पेटमै पानी र कार्बनडाइअक्साइडमा टुक्राइदिन्छ। जसले गर्दा रक्सी पिए पनि खासै त्यसको नशा लाग्दैन र ह्याङओभर पनि हुन पाउँदैन।

हाल बेलायतमा यो चक्की अनलाइनमा उपलब्ध छ र ३० वटा चक्कीको मूल्य ३० पाउन्ड रहेको छ। त्यसमा दुई खालका चक्की छन्, जसमध्ये एउटा रक्सी पिउनुभन्दा १२ घण्टा अगाडि खाने खालको छ भने अर्को एक घण्टाअघि।

यो चक्कीले शरीरमा ऊर्जा तथा प्रतिरक्षाको स्तरलाई पनि बढाउँछ। जुन चिजबाट यो औषधि बनेको छ त्यसलाई युरोपेली खाद्य सुरक्षा एजेन्सी तथा अमेरिकी खाद्य तथा औषधि प्रशासनबाट स्वीकृति प्राप्त छ र सुरक्षित पनि छ तर गर्भवती तथा स्तनपान गराइरहेका महिला र १८ वर्षभन्दा कम उमेरका व्यक्तिका लागि यो चक्कीको सेवन हानिकारक मानिएको छ। ■



१८१८ मा पाइरे बोयरले विभाजित मुलुक एकीकरण गरेसँगै केही समय शान्त जस्तो देखिए पनि सत्ताको हानथापमै वर्षौं बित्यो ।

अमेरिकाले पछि हैटीमा लगानी गर्‍यो तर आफ्नो पुँजी र लगानी असुरक्षित भएको भन्दै सन् १९१५ मा अमेरिकाले हैटीमाथि कब्जा जमायो । सन् १९४७ मा मात्र अमेरिकाले हैटीबाट आफ्ना सैनिक फिर्ता लगेको थियो । त्यहाँ सन् १९५७ मा राष्ट्रपतिको निर्वाचन भयो । फ्राङ्कोइस पापा डक डेबालिएरले चुनाव जिते तर उनले आफूलाई आजीवन राष्ट्रपति घोषित गरे । उनको सन् १९७१ मा निधन भयो । त्यसपछि उनका




छोरा जन क्लाउड बेबे डक डेबालिएरले सत्ता हातमा लिए । उनले पनि बावुकै नीति अख्तियार गरी आफूलाई आजीवन राष्ट्रपति घोषणा गरे । उनको अत्याचारी शासनविरुद्ध ठूलो विद्रोह भयो । सन् १९८६ मा उनलाई सत्ताच्यूत गरेसँगै त्यहाँ २९ वर्षे पारिवारिक शासन अन्त्य भएको थियो ।

सन् १९९० मा त्यहाँ पहिलो पटक स्वतन्त्र र निष्पक्ष चुनाव भयो । फादर जेन बर्टान्ड एरिस्टिड राष्ट्रपति निर्वाचित भए तर एक वर्षपछि सेनाले उनलाई हटाई सत्ता हातमा लियो । त्यसको विरोधमा अमेरिकाले नाकाबन्दी लगायो । सन् २००४ मा प्रजातन्त्र पुनर्स्थापना गर्ने भन्दै अमेरिकाले त्यहाँ २० हजार सैनिक पठायो । एरिस्टिडको सत्ता पुनर्स्थापना भयो तर उनलाई सत्ता चलाउन दिइएन । हिंसा र अराजकता बढ्यो । अनि संयुक्त राष्ट्रसङ्घले पनि शान्ति सेना पठायो ।

सन् २००५ मा विद्रोही नेता रेभिक्स रेमिसेन्थेको हत्या भयो । यस घटनाले समस्या झन् बल्झियो । सन् २००६ मा भएको राष्ट्रपतीय निर्वाचनमा रेने प्रेभल निर्वाचित भए । अनि अमेरिकाले हैटीमाथि लगाएको नाकाबन्दी केही खुकुलो गर्‍यो । हैटीको विकासका लागि विदेशी सहयोग आह्वान गरियो । केही विदेशी लगानी भित्रियो पनि तर २०१० मा त्यहाँ विनाशकारी भूकम्प गयो । त्यसमा तीन लाख मानिस मरे । त्यहाँको अधिकांश भौतिक संरचना ध्वस्त भयो । भूकम्पपछि हैजाको महामारीले हजारौँ मानिस मरे । हैटी झन् अस्तव्यस्त बन्यो ।

सन् २०११ मा भएको राष्ट्रपतीय निर्वाचनमा मिसेल मार्टेली निर्वाचित भएका थिए । उनको कार्यकाल पनि विवादमै बित्यो । विरोध प्रदर्शन, हिंसात्मक घटना

रोकिएनन्। सन् २०१६ मा भएको राष्ट्रपतीय निर्वाचनमा मोइज निर्वाचित भई सन् २०१७ देखि सत्ता सम्हाले। सोही वर्ष राष्ट्रसङ्घ शान्ति सेना फिर्ता भयो। शान्ति सेना फिर्ता भएसँगै फेरि हिंसात्मक प्रदर्शन सुरु भए। विपक्षीहरू राष्ट्रपतिविरुद्ध उभिए। यही अन्योलबीच बन्दुकधारी समूहले राष्ट्रपति मोइजको हत्या गर्‍यो।

एक करोड २० लाख जनसङ्ख्या रहेको हैटीको क्षेत्रफल २७ हजार ७५० वर्ग किमी छ। यहाँको मुख्य भाषा क्रेओल र फ्रेन्च हो। यहाँका मानिस इसाई धर्म मान्छन्। औसत आयु पुरुषको ६१ वर्ष र महिलाको ६४ वर्ष रहेको छ। ■



## बर्गर खाएर विश्व कीर्तिमान



अमेरिकामा एक पुरुषले ३४ हजार १२८ वटा बर्गर खाएर विश्व कीर्तिमान बनाएका छन्। ती पुरुषको नाम हो– डोनाल्ड गोर्स्के। ७० वर्षीय गोर्स्केले हालसम्म खाएका बिग म्याकबर्गरको सङ्ख्या ३४ हजार १२८ पुगेको छ। सबैभन्दा बढी बर्गर खाने कीर्तिमान यसअघि पनि निरन्तर उनकै नाममा थियो र पछिल्लो पटक उनले आफ्नै कीर्तिमान भङ्ग गरेका हुन्।

बर्गर खाने उनको यात्रा करिब ५२ वर्षअघि सुरु भएको थियो। गिनिज वर्ल्ड रेकर्डस्का अनुसार उनको कीर्तिमान बर्गर खाने यात्राको सुरुवात सन् १९७२ को मे १७ मा भएको थियो। उनी भन्छन्, "मैले सायद जीवनभर बर्गर खाइरहने छु।"

त्यस दिनपछि उनले आफूले खाएका प्रत्येक बर्गरको हिसाब राख्न थाले। उनले खाएका बर्गरका बक्स कारमा राख्दथे र पहिलो दिनबाटै गणना सुरु गर्दथे। अमेरिकाको बिस्कन्सिन बस्ने उनी अवकाश प्राप्त जेल अधिकारी हुन्। उनले दशकौँदेखि आफ्नो बर्गरको बाकस तथा रसिद सुरक्षित राखेका छन्।

उनले बर्गर खाएर पहिलो विश्व कीर्तिमान सन् १९९९ मा बनाएका थिए। सुरु सुरुमा उनले दैनिक नौ वटासम्म बर्गर खान्थे। त्यसपछि उनले घटाएर दुई वटामा झारे। त्यसमध्ये एउटा दिउँसोको लन्चमा र अर्को रातको डिनरमा खान्थे।

गिनिज वर्ल्ड रेकर्डस्का अनुसार ताजा बर्गर खरिद गर्नका लागि डोनाल्ड दिनहुँ म्याकडोनाल्डस जान्थे तर जागिरबाट अवकाश भएपछि उनी हप्तामा दुई पटक मात्रै म्याकडोनाल्डसमा गएर एकैचोटि धेरै बर्गर किनेर ल्याउँछन्। त्यसरी ल्याएकामध्ये एउटा तुरुन्तै खान्छन् र बाँकी घरमा राख्छन्।

यति धेरै बर्गर खाँदा उनलाई बर्गरका कारण हालसम्म कुनै पनि स्वास्थ्य समस्या भएको छैन। उनले दैनिक छ माइलसम्म हिँड्ने गरेका छन्। ■

# महिनाको खेलाडी

## एरिका गुरुङ (कराँते खेलाडी)

चैतमा नेपालकी कराँते खेलाडी एरिका गुरुङको नेपाली खेलवृत्तमा चर्चा भयो । एरिकाले प्रतिष्ठित प्रतियोगिता युएस ओपन कराँतेमा एक स्वर्ण र एक रजत पदक जितिन् । एरिकाले अमेरिकाको टेक्सासमा भएको अन्तर्राष्ट्रिय कराँतेको यु-२१ महिला ६८ केजीमाथि तौल समूहमा स्वर्ण पदक जितेकी हुन् । त्यहाँ उनले अर्को स्पर्धामा रजत पदक पनि जितिन् ।

पछिल्लो पटक गत असोजमा होङ्झाव एसियाडमा रजत पदक जित्दा खेलकुदमा एरिकाको नाम गुञ्जिएको थियो । एसियाड सकिन एक दिनअघि एरिकाले कराँतेमा रजत पदक जितेर आफूलाई देशले चिन्ने बनाएकी थिइन् । त्यसअघि एरिका गुमनाम थिइन् । एसियाडअघि १९ वर्षीय एरिकासँग खासै अन्तर्राष्ट्रिय प्रतियोगिताको अनुभव पनि थिएन । उनी राष्ट्रिय टिमको बन्द प्रशिक्षणमा परेको नै पहिलो पटक थियो ।

एसियाडको तयारीमा इन्डोनेसियामा खेलेको वर्ल्ड सितेरियो कराँते च्याम्पियनसिप एरिकाको पहिलो अन्तर्राष्ट्रिय अनुभव थियो । सो प्रतियोगितामा पनि एरिकाले एक स्वर्ण र एक कांस्य पदक जितेर आफ्नो क्षमता देखाइन् । एसियाड बेग्लै स्तरको प्रतियोगिता थियो, जहाँ विश्व च्याम्पियन कराँते खेलाडी पनि सहभागी थिए ।

एरिकाले होङ्झावमा नेपाली खेलकुद इतिहासकै व्यक्तिगत सबभन्दा ठूलो पदकको बराबरी गरिन् । २५ वर्षअघि बैङ्ककमा भएको १३ औँ एसियाडमा तेक्वान्दो खेलाडी सविता राजभण्डारीले ऐतिहासिक रजत पदक हासिल गरेकी थिइन् । अझ क्वाटरफाइनल दाबेदार मानिएका जापानी खेलाडीलाई हराएपछि नेपालको सङ्ग्रहमा पहिलो पटक एसियाली खेलकुदको स्वर्ण पदक पनि जोडिने सम्भावना बनेको थियो तर एरिकाले स्वर्ण पदकका लागि अन्तिम बाधा पार गर्न सकिनन् ।

अहिले छ महिनापछि अमेरिकाको टेक्सासमा भएको युएस ओपनमा पनि पदक जितेर एरिकाले स्वर्ण पदकको तिर्खा मेटाएकी छन् ।

धादिङमा जन्मिएकी एरिकाले कराँतेको जग मनमैजु डोजोबाट बसालेकी हुन् । करिब एक दशकअघि एरिकाको परिवार धादिङबाट काठमाडौँको मनमैजु सरेको थियो । एरिका बसेको घर नजिकै मनमैजु डोजो छ । जुन एरिकाका लागि वरदान साबित भयो । घरनजिक भएकाले एरिका १० वर्षको उमेरमै कराँते डोजोमा पुगिन् । सुरुमा साथीहरूको लहलहैमा कराँते खेलेकी एरिकालाई चाँडै यस खेलले आफ्नो मोहजालमा पाऱ्यो । एरिकालाई सुरुको समयदेखि मनमैजु डोजका प्रशिक्षक निरज महर्जनले प्रशिक्षण दिएका थिए । एरिकाको पहिलो ठूलो प्रतियोगिता गत वर्ष पोखरामा भएको नवौँ राष्ट्रिय खेलकुद थियो । त्यस प्रतियोगितामा भर्खर १८ वर्ष पुगेकी एरिकाले स्वर्ण जित्लिन् भन्ने कसैले सोचेको थिएन । एरिकाको सोचाइ भने फरक थियो, जित्छु । नभन्दै एरिकाले आफूभन्दा अनुभवी खेलाडीलाई हराउँदै आफ्नो पदार्पणमै स्वर्ण पदक जितिन् ।

यस्तो विशेष प्रदर्शनपछि एरिका कराँतेकर्मीको नजरमा परेकी हुन् । सोही कारणले पनि उनी एसियाली खेलकुदका लागि प्रारम्भिक टोलीमा परिन् । एरिकाले सो अवसरलाई गुम्न दिइनन् र आफ्नो क्षमताले एसियाड जाने टिममा पनि स्थान बनाइन् । त्यसपछि उनले अहिलेसम्म पछाडि फर्केर हेरेकी छैनन् ।

राष्ट्रिय टिममा परेपछि एरिकाले दीपक श्रेष्ठ, कुशल श्रेष्ठलगायत अन्य उच्चस्तरका प्रशिक्षकबाट सिक्ने अवसर पाइन् । उनको कराँते खेल्ने क्षमता अझ वृद्धि हुँदै गयो । उनको प्रदर्शनको ग्राफ झन् झन् माथि उक्लिँदै गएको छ । ■

*–प्रजित शाक्य*



# क्रिकेटको प्रगति फुटबलको अधोगति





■ सोमराज पोखरेल

नेपाली खेलकुदमा सबैभन्दा बढी लगानी नेपाली फुटबलमा भएको छ। फुटबलका क्लबहरू, अनेक प्रतियोगिता छन् । मैदान पनि छन् । स्वार्थ र व्यवस्थापनको कमीका कारण अहिले नेपाली फुटबल अधोगतिमा छ ।

क्रिकेट चाहिँ दिनप्रतिदिन अगाडि बढ्दै छ । क्रिकेटले दर्शकको माया पनि धेरै नै पाएको छ । पूर्वाधार र लगानीको कमी क्रिकेट विकासका अवरोध देखिन्छन् ।

खेलकुदप्रति सरकारको स्पष्ट नीतिको अभाव अनि प्रशासनिक जिम्मेवारी सम्हाल्दै आएको राष्ट्रिय खेलकुद परिषद्ले स्पष्ट दफामा टेकेर खेलकुदलाई व्यवस्थापन गर्न सक्षम नभएकै कारणले विश्वमा सर्वाधिक लोकप्रिय खेल फुटबलबाट नेपाल झन् झन् टाढिँदै गएको छ ।

तुलनात्मक रूपमा अखिल नेपाल फुटबल सङ्घ (एन्फा) अन्य खेलकुद सङ्घभन्दा बलियो छ । उसले फुटबलको सर्वोच्च निकाय फिफा र एसिया हेर्ने एसियाली फुटबल महासङ्घ (एएफसी) बाट प्राप्त गर्ने अनुदान र सुविधा पनि धेरै नै छ ।

यति हुँदाहुँदै पनि फुटबलको अन्तर्राष्ट्रिय क्षेत्रमा अपेक्षाकृत परिणाम निकाल्न नेपाली टिम असमर्थ रहँदै आएको छ । हुँदाहुँदा व्यवस्थापनको कमजोरीका कारण नेपालमा हुनुपर्ने कतिपय अन्तर्राष्ट्रिय प्रतियोगितासमेत सारिएका छन् । पहिले नतिजा कमजोर हुँदा पनि



एएफसीले प्रतियोगिता आयोजना गर्न पत्याउने गर्दथ्यो र जेनतेन भएका केही रङ्गशालाबाटै प्रतियोगिता हुने गर्दथे। अहिले रङ्गशाला जोगाइराख्न नसक्दा अन्तर्राष्ट्रिय खेल आयोजना गर्नबाट समेत नेपाल वञ्चित हुँदै आएको छ।

पछिल्लो समय नेपालका विश्वकप फुटबल छनोटमा दोस्रो चरणका खेल नेपालमा नहुने अवस्था आएको छ। भएको एक मात्र रङ्गशाला दशरथ रङ्गशालाको स्तर खस्किएकै कारण नेपालले घरेलु मैदानमा खेल्नुपर्ने खेलसमेत खेल्न पाएन।

फुटबलका गतिविधि मात्रै गर्नुपर्नेमा विभिन्न साङ्गीतिक एवं अन्य कार्यक्रम गरेर मैदान बिगार्नमा एन्फाकै पदाधिकारीको जोडबल हुने गरेको आरोप छ।

अहिले आएर युवा तथा खेलकुदमन्त्री विराजभक्त श्रेष्ठले रङ्गशाला हेर्ने जिम्मा राष्ट्रिय खेलकुद परिषद्लाई नै दिने निर्णय गरेका छन् तर विगतको व्यवस्थापन हेर्दा खेलकुद परिषद्ले सम्हाल्दा रङ्गशालाको झनै दुर्दशा भएको थियो।

एकातिर नेपाली टिमले घरेलु मैदानमा खेल्नुपर्ने खेलसमेत यहीँ खेल्न नपाउनु र अर्कातिर खेलाडीहरूको भविष्यको सुनिश्चितता नहुँदा खेलाडी पलायनको क्रम बढेको छ। कुनै समय नियमित हुँदै आएको लिगसमेत प्रभावित भएको छ।

नेपालले रङ्गशालाको दुरवस्थाका कारण बहराइनविरुद्धको घरेलु खेल बहराइनकै मैदानमा खेल्न बाध्य भयो। अबका खेल पनि सहजै नेपालमा हुने अवस्था देखिँदैन। नेपाली फुटबलले सन् १९८० को दशकदेखि अन्तर्राष्ट्रिय प्रतियोगितामा सहभागिता जनाउन थालेको भए पनि उल्लेखनीय प्रदर्शन अहिलेसम्म गर्न सकेको छैन।

महिला फुटबल टिमको अवस्था त झन् दयनीय नै छ। अहिलेसम्म महिला टिमले एउटा उपाधिसमेत जित्न सकेको छैन। एन्फाको महिला र पुरुष खेलाडीलाई गर्ने व्यवहार फरक हुँदा अहिलेको अवस्था आइपुगेको भनाइ छ नेपाली महिला फुटबल टिमकी पहिलो अन्तर्राष्ट्रिय कप्तान रमा सिंहको।

यसको अर्को पाटोमा हेर्ने हो भने फुटबलपछिको चर्चित खेल क्रिकेटले तुलनात्मक रूपमा ठूलै सफलता हासिल गरेको छ। नेपाल दोस्रो पटक विश्वकप टी–२० क्रिकेट प्रतियोगितामा छानिन सफल भएको छ। यसअघि नेपाल सन् २०१४ को विश्वकपमा पनि छानिन सफल भएको थियो।




**बरोड क्रिकेट एसोसिएसन र गुजरात क्रिकेट एसोसिएसनका टिमसँग खेल्न परे पनि नेपाली टिमले अभ्यास गर्ने मौका राम्रै पाएको छ ।**

नेपालले एकदिवसीय खेलको मान्यतालाई समेत कायम राखेको छ भने पहिलो पटक एसिया कप क्रिकेट प्रतियोगितामा पनि खेलेको छ । त्यही एसिया कपमा विश्व क्रिकेटका महारथी टिमहरू भारत र पाकिस्तानको समूहमा रहेर प्रशंसनीय प्रदर्शन गरेको नेपालले थप अवसर पाउने हो भने लामो दूरीको घोडा बन्न सक्छ ।

भारतले नेपाली टिमलाई थप अभ्यास दिलाउने उद्देश्यले अमेरिका र वेस्टइन्जिडको आयोजनामा हुने विश्वकपअगाडि नै एसएमएस च्याम्पियनसिप आयोजना घरेलु मैदानमा गरेको छ । बरोड क्रिकेट एसोसिएसन र गुजरात क्रिकेट एसोसिएसनका टिमसँग खेल्न परे पनि नेपाली टिमले अभ्यास गर्ने मौका राम्रै पाएको छ । नेपालको 'ए' टिमले आयरल्यान्डको 'ए' टिमसँग निरन्तर खेलिरहँदा पनि खेलाडीलाई खार्नका लागि सजिलो भएको नेपाल क्रिकेट सङ्घको विश्वास छ ।

सन् २०२४ को जुन ४ देखि ३० सम्म हुने विश्वकपमा २० टिमले सहभागिता जनाउने छन् । वरीयताप्राप्त १२ टिमले स्वतः विश्वकप खेल्न पाउँदा बाँकी आठ टिम नेपालले जस्तै छनोट चरण पार गरेर विश्वकपमा पुगेका हुन् ।

त्यसो त सरकारले खेलाडीलाई गम्भीर भएर अभिभावकीय भूमिका निर्वाह नगरेसम्म नतिजा राम्रो आउने आशा गर्न सकिन्न । नेपाली क्रिकेट टिमका कप्तान रोहित पौडेलले खेलकुद मन्त्रीलाई सरकारले वाचा गरेको नगद पुरस्कार भने नदिएको गुनासो गरेपछि कुन अवस्थाबाट खेलाडी गुज्रेका रहेछन् भन्ने स्पष्टै हुन्छ ।

### उपाधि विजेता विजय र पुष्पा

विजय रावत र पुष्पा भण्डारीले तेस्रो किसुनजी स्मृति राष्ट्रिय खुला हाफ म्याराथनको उपाधि जितेका छन् । चैतमा काठमाडौँमा भएको प्रतियोगितामा विजय पुरुष तथा पुष्पा महिला वर्गमा पहिलो भएका थिए ।

विजयले निर्धारित दूरी एक घण्टा सात मिनेट ५६ सेकेन्डमा पूरा गरे । यस वर्गमा करणसिंह बोगटी दोस्रो तथा अजितकुमार यादव तेस्रो भएका थिए ।

महिला वर्गको दौडमा पहिलो भएकी पुष्पाले निर्धारित दूरी एक घण्टा २३ मिनेट ०५ सेकेन्डमा पूरा गरिन् । दोस्रो राममाया बुढा र सुशान कार्की तेस्रो भइन् ।

यस्तै पुरुष वर्गको पाँच किलोमिटर दौडमा धनुवा नन्दले पहिलो स्थान तथा महिला वर्गको यही स्पर्धामा शर्मिला बस्नेत पहिलो भएकी थिइन् । ■

# क्यान्सर र यौन



**क्या**न्सर र यौन विषयमा कुरा गर्दा दुइटा पक्षबाट कुरा गर्नुपर्ने हुन्छ। पहिलो, यौन सम्बन्ध वा यौन क्रियाकलापकै कारण कुन कुन क्यान्सर लाग्ने सम्भावना हुन्छ ? दोस्रो, के क्यान्सर लाग्नेबित्तिकै प्रभावित व्यक्तिको यौन जीवन सकिन्छ ?

अब पहिलो पक्षका बारेमा छलफल गरौँ। कतिपय सङ्क्रामक रोग जस्तै क्यान्सर र यौन कार्यबीच पनि प्रत्यक्ष सम्बन्ध छ। सानै उमेरदेखि तथा धेरै जनासँग यौन सम्बन्ध राख्नु पाठेघरको मुखको क्यान्सरको मुख्य जोखिम तत्त्व हो। त्यसो त एचपीभी (ह्युम्यान पापिलोमा भाइरस) ले अधिकतर महिला वा किशोरीलाई जीवनकालमा एक न एक पटक सङ्क्रमण गर्दछ नै। एचपीभी सङ्क्रमण हुँदैमा पाठेघरको मुखको क्यान्सर लागिहाल्छ भन्ने पनि होइन तर चुरोट पिउने व्यक्तिलाई फोक्सो क्यान्सर लाग्ने सम्भावना बढी भए जस्तै अधिक यौनिक क्रियाकलापले एचपीभीको सङ्क्रमण बढ्ता हुन्छ।



■ प्राडा सुमनराज ताम्राकार

यसमध्ये एचपीभी–१६, एचपीभी–१८ उपजातिको कारण पाठेघरको मुखको क्यान्सर लाग्ने सम्भावना





बढ्छ । एचपीभी सङ्क्रमणका कारण पाठेघरको मुखको क्यान्सरका साथै स्त्री जननेन्द्रिय बाहिरको भाग (भल्भा) को क्यान्सर, योनिमार्गको क्यान्सर, पुरुष लिङ्गको क्यान्सर, मुख एवं घाँटीको क्यान्सर हुने सम्भावना हुन्छ ।

एचआईभी सङ्क्रमण/एड्स रोगका साथै हेपाटाइटिस बी, सी र डी पनि असुरक्षित यौन क्रियाकलापबाट सर्दछ । एचआईभी सङ्क्रमितमा शरीरको प्रतिरक्षा प्रणाली कमजोर हुने भएकाले क्यान्सर लाग्ने एवं क्यान्सर लागिहालेमा मृत्यु हुने जोखिम बढ्छ । एचआईभीकै कारण रगतको क्यान्सर एवं कापोसी कार्सिनोमा भनिने छालाको क्यान्सर हुने जोखिम हुन्छ ।

हेपाटाइटिस बी, सी र डीको सङ्क्रमणबाट कलेजो तथा पित्त बहने नलीको क्यान्सर लाग्ने सम्भावना बढी हुन्छ । त्यसैगरी इप्स्टेन बार भाइरसका कारण रगतको तथा मुख एवं घाँटीको क्यान्सर हुने जोखिम हुन्छ । यौनाङ्गमा आउने मुसा पछि गएर क्यान्सरमा परिणत हुन सक्छ ।

एन्टिबायोटिकको उपयोगसँगै यौन सङ्क्रमणमा आएको कमीले कतिपय क्यान्सरको सम्भावनामा पनि कमी आएको पाइन्छ । यौन सङ्क्रमणका कारण प्रोस्टेटको सुजन भई कालान्तरमा प्रोस्टेट क्यान्सर हुने जोखिम हुन्छ । त्यसैले सानै उमेरदेखि तथा धेरै जनासँग यौन सम्पर्क राख्यो भने प्रोस्टेटको क्यान्सरको जोखिम झन् बढ्ता हुन्छ ।

## क्यान्सर प्रभावितको यौनजीवन

अब दोस्रो पक्षतिर लागौँ । के क्यान्सर लाग्नेबित्तिकै प्रभावित व्यक्तिको यौन जीवन सकिन्छ ? आधुनिक चिकित्सा विज्ञानको उच्चतम विकाससँगै समयमै उपचार गराएको खण्डमा हाल धेरै क्यान्सरको उपचार सम्भव छ । तर पनि कसैलाई क्यान्सर लागेको कुरा थाहा पाउनासाथ निराश भइहाल्ने र अधमरो जीवन बिताउनेको सङ्ख्या अधिक देखिन्छ तर वास्तविकता त्यसो होइन । क्यान्सर प्रभावितले

**बेलैमा उपचार गरेको खण्डमा शारीरिक क्षमताका साथै यौन कार्यक्षमतामा पनि सुधार आउँछ ।**



पनि आफ्नो यौन जीवन कायम नै राख्न सक्छन् । सय वर्ष बाँच्ने भाग्य कति नै मानिसले लिएर आएको हुन्छ र ? त्यसो भएर क्यान्सरसँगै बाँच्न अभ्यस्त हुन जरुरी छ ।

यौन प्रतिक्रिया चक्र अर्थात् यौन क्रियाकलापको अन्तिम गन्तव्य योनि र लिङ्गबीचको मिलन वा घर्षण हो तर यही मात्र यौन साध्य भने होइन । क्यान्सरको निदानको क्रममा, शल्यक्रियाको समयमा, केमोथेरापी, रेडियोथेरापीका बेला यसरी शारीरिक तवरमा यौन सम्बन्ध नै राख्न सम्भव नहोला । त्यसमाथि पाठेघरको मुख, पाठेघर वा पुरुष लिङ्गमै क्यान्सर भएका बेला वा तल्लो पेटमा जननेन्द्रिय वरिपरिका अङ्गमै क्यान्सर हुँदा भौतिक रूपमा यौन सम्पर्क नै राख्न सम्भव हुँदैन तर योनि र लिङ्गबाहेक महिला, पुरुषको शरीरमा यौन क्रियाकलापका हिसाबले महत्त्वका अन्य अङ्ग पनि छन् ।

जीव विज्ञानका अनुसार महिला तथा पुरुषको मस्तिष्कमा विपरीत लिङ्गीप्रति यौनिक हिसाबले आकर्षक पैदा गर्ने गुण रहेका हुन्छन् । यसै कारण पनि विशेषतः किशोरावस्था पुगेपछि विपरीत लिङ्गीप्रति आकर्षण बढ्न थाल्छ । यस्तैमा पुरुष तथा महिलाका लागि आ–आफ्नै यौन आकर्षणका अङ्ग वा अपेक्षा हुन्छन् । महिलाको शरीरमध्ये अनुहारमा ओठ, गाला, आँखाका साथै वक्षस्थल, काँध, नाइटो, कम्मर, पिठ्युँ, तिघ्रा, पिडौँला, पैताला यौन आकर्षणका अङ्ग हुन् । त्यसैगरी पुरुषको बलिष्ठ तथा सुगठित शरीर, चौडा छाती, सानो पुट्ठा, सुलुत्त परेको पेट, छातीको तथा नाइटोमुनिको रौँ यौन आकर्षण बढाउने भाग हुन् । पुरुषको ओठ, आँखा पनि आकर्षक नै मानिन्छ ।



यी त भए यौनका हिसाबले आकर्षक अङ्गहरू । अब योनि र लिङ्ग मिलनबाहेक अन्य यौन क्रियाकलापले पनि उत्तिकै यौन आनन्द प्राप्त गर्न सम्भव हुन्छ । यस्तैमा यौनपरक भलाकुसारीको आफ्नै महत्त्व छ । यौनिक दृष्टिले संवेदनशील अङ्गको परिकल्पना, स्पर्श, गन्ध एवं घर्षणले अधिक यौन आनन्द लिन सकिन्छ । यौनाङ्गको स्पर्श, घर्षण एवं यौन आनन्दका वैकल्पिक उपायले यौन सम्पर्कमा जत्तिकै यौन आनन्द लिन सम्भव हुन्छ । स्पर्शबिना चरम सन्तुष्टि अर्थात् 'अर्गाज्म' प्राप्त गर्न असम्भव प्रायः छ ।

यौन परिकल्पनासँगै हस्तमैथुन गर्ने वा गरिदिनेबाहेक यौन संवेदनशील अङ्गमा चुम्बन अर्को विकल्प हुन सक्छ । त्यसो त चुम्बन (अधरपान) माया, स्नेह प्रदर्शन गर्ने माध्यम पनि हो । यसका अनेक रूप छन् । ओठमा बाहेक गर्धन, छाती, स्तन, नाभी, नितम्ब, यौनाङ्ग, खुट्टाका औँलामा यौन आनन्द प्राप्त गर्न चुम्बन गर्न






सकिन्छ। त्यसैगरी आलिङ्गनमा लिई शारीरिक अङ्ग सुमसुम्याउने कार्य स्नेह प्रदर्शन गर्ने तरिका पनि हो। कपाल, स्तन, स्तनका मुन्टा, तिघ्रा, यौनाङ्ग वा शरीर घर्षण यौन सुखदायक पनि हुन्छ।

यसरी यौनाङ्गबीचको घर्षण (स्पर्श) बाहेक अँगालो मार्नु, सुमसुम्याउनु, चुम्बन गर्नु, दबाउनु, हल्का चिमोट्नु, कान टोक्नु, औँला टोक्नु सबै यौन स्पर्शका माध्यम हुन्।

यौन साहित्यमा वर्णन गरिएका शब्दचित्रले यौन परिकल्पना वा यौन उत्तेजक दृश्य सामग्री अवलोकन गरी यौन आनन्द प्राप्त गर्न सकिन्छ। सूचना प्रविधिको विकासलाई विकृतिका रूपमा मात्र नलिई सौम्य तरिकाले यौन चलचित्र वा यौनजन्य सामग्रीमार्फत पनि यौन आनन्द लिन सकिन्छ।

## सारांश

क्यान्सरका कारण कतिपयको यौन जीवनमा नकारात्मक असर पुग्न सक्छ। बेलैमा उपचार गरेको खण्डमा शारीरिक क्षमताका साथै यौन कार्यक्षमतामा पनि सुधार आउँछ तर क्यान्सर प्रभावित व्यक्तिको यौनेच्छा, यौन चाहना पनि सबलाङ्ग व्यक्तिको जस्तै हुन सक्छ।

यही कुरा व्यक्तिका परिवार, आफन्तजन तथा तिनीहरूको उपचारमा संलग्न स्वास्थ्यकर्मीद्वारा तिनीहरूको यौन स्वास्थ्यबारे चासो राख्ने तथा आवश्यक छलफल गर्नुपर्ने बेला भइसकेको छ। त्यसैगरी क्यान्सर प्रभावित व्यक्तिको पनि प्रजनन स्वास्थ्य तथा यौन हक एवं अधिकारका विषयमा छलफल हुनु आवश्यक छ। ■

**क्यान्सरका कारण कतिपयको यौन जीवनमा नकारात्मक असर पुग्न सक्छ।**

# भाषा ज्ञान

| | |
|---|---|
| भवजल : | भवसागर |
| ततर : | अन्नभण्डार |
| तपत : | तातो, उष्ण |
| जायाजीवी : | पत्नीको सम्पत्तिको भरमा निर्वाह गर्ने |
| मिथ्याजाल : | भ्रमको जालो |
| याजक : | यज्ञ गर्ने वा गराउने व्यक्ति, पुरोहित |
| मसाउनु : | मास्न लगाउनु, खर्च गर्न लगाउनु |
| समचाप : | हावा आदिको समान चाप वा दबाब |
| शाट : | कपडाको टुक्रो |
| साक : | सास |
| उपनय : | उन्नति, प्रगति |
| उपशमन : | शान्त रहने स्थिति |
| वापिका : | सानो खालको कुवा वा तलाउ |
| अवाप्त : | मिलेको, भेटिएको |
| वाइपाका : | लठेब्रो |
| बालपोथरी : | साना पोथा र बिरुवा |
| अदाहक : | नजलाउने, छटपटीमा नपार्ने |
| दीपाकर : | दियोको आकार |
| अदाक्षिण्य : | शिष्टताको अभाव |
| घपना : | ढकनी |
| घनचान्या : | ठूलो टाउको भएको |

| | |
|---|---|
| **Misguide** | बहकाउनु |
| **Enforce** | लागु गर्नु |
| **Tremble** | काम्नु, थरथराउनु |
| **Beau** | प्रेमी, मन पराउनेवाला |
| **Crush** | आशक्ति, दबाब |
| **Elegant** | सुन्दर, मनोहर |
| **Ailment** | बिरामी, विकार |
| **Affront** | अपमान, तिरस्कार |
| **Snoop** | जासुस, चियो गर्नु |
| **Oath** | शपथ |
| **Burp** | डकार |
| **Puny** | कमजोर, सानो |
| **Gigantic** | भयङ्कर, विशालकाय |
| **Mammoth** | प्राचीन हात्ती, महाकाय |
| **Bland** | विनीत, सौम्य |
| **Persist** | कायम रहनु, लागिरहनु |
| **Timid** | डरपोक, कायर |
| **Congestion** | भीडभाड, रक्तसञ्चय |
| **Despise** | घृणा गर्नु, उपेक्षा गर्नु |
| **Affable** | मिलनसार, सुशील |
| **Passionate** | जोशिलो, भावुक |




| Let | Let's |
|---|---|
| Let me go. | Let's go home. |
| Let me see. | Let's go for a walk. |
| Let me go there. | Let's go to the party. |
| Let me do the work. | Let's go to the garden. |
| Let me play football. | Let's help the poor man. |
| Let me write the letter. | Let's arrange a meeting. |
| Let me read the book. | Let's meet the chairman. |
| Let me have some food. | Let's go to the restaurant. |

**Let** - to allow or take permission someone to do something.

**Let's** - When we work together or do something with someone.

ब्रेन गेम

## यस चित्रमा गल्ती खोज्नुहोस् ।




## प्रश्न




कुकुर, बिरालो र खरायोको कुल तौल पत्ता लगाउनुहोस् ?

सीता गीताकी बहिनी हुन् ।
सङ्गीता गीताकी आमा हुन् ।
श्याम सङ्गीताका बुवा हुन् ।
अब भन्नुहोस् सीता र श्यामको बीचमा के नाता पर्छ ?

तपाईंले ९०० रुपियाँमा एउटा कुखुरा किन्नुभयो ।
त्यसलाई १२०० रुपियाँमा बेच्नुभयो ।
फेरि त्यसलाई १३०० रुपियाँमा किन्नुभयो ।
फेरि त्यसलाई १६०० रुपियाँमा बेच्नुभयो ।
अब भन्नुहोस् तपाईंलाई कति फाइदा भयो ?

उत्तर यसै अङ्कमा



यस चित्रमा चितुवा खोज्नुहोस् ।



चित्रमा अन्तरिक्ष यान कहाँ छ ।

# परिणामहरू

## अङ्कजाल प्रतियोगिता, वैशाख-२०८१

**नियमहरू :**

१. अङ्कजाल भर्न खाली कोठाहरूमा १ देखि ९ अङ्कसम्म भर्नुपर्नेछ।
२. प्रत्येक ठाडो लहर र तेर्सो लहरमा १ देखि ९ अङ्कसम्म भर्नुपर्नेछ।
३. अङ्कजालमा ३×३ का नौवटा वर्ग रहेका छन्। ३×३ को प्रत्येक वर्गमा पनि १ देखि ९ अङ्कसम्म नदोहोर्‍याई भर्नुपर्नेछ।
४. समाधान २०८१ जेठ १५ सम्ममा 'युवामञ्च' को कार्यालयमा आइपुगिसक्नुपर्नेछ।
५. अङ्कजाल भरेर पठाउँदा यसै पत्रिकाको कटिङ पठाउनुपर्नेछ। केरमेट र अस्पष्ट समाधानलाई प्रतियोगितामा सहभागी गराइने छैन।
६. सही समाधान पठाउने दुई जनालाई सात-सात सय रुपियाँ पुरस्कारको व्यवस्था गरिएको छ। दुईभन्दा बढीले सही समाधान पठाएमा गोलाप्रथाद्वारा विजयीको छनोट गरिनेछ।
७. नतिजासम्बन्धी युवामञ्चको निर्णय नै अन्तिम निर्णय हुनेछ।

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| | १ | | | | | ५ | ६ | |
| ७ | | | | ४ | २ | | | ९ |
| ३ | | | | | | | | |
| | ९ | | ५ | २ | ४ | | | |
| | २ | | ६ | | ९ | | १ | |
| | | | ८ | १ | ७ | | ३ | |
| | | | | | | | | ३ |
| ४ | | | २ | ५ | | | | ८ |
| | ६ | २ | | | | | ५ | |

**नाम :** ..........................................

**ठेगाना :** ........................................

## सामान्यज्ञान फागुन अङ्कको उत्तर

**समूह क :** १. भीमशमशेर २. बाल मजदुरी उन्मूलन ३. मेकियाबेली
**समूह ख :** १. पोखरा २. नक्कली डाक्टर पत्ता लगाउन नेपाल प्रहरीद्वारा सञ्चालित अभियान ३. नेपाल हुलाक घर
**समूह ग :** १. धुरा २. मिर्गौला ३. बुटवल
**समूह घ :** १. सदर जेल २. माछापुच्छ्रे गाउँपालिका (कास्की) ३. ग्रेब्रियल याटाल (३४ वर्ष)
**समूह ङ :** १. राजेन्द्रविक्रम शाह २. जिम्बाब्वे र जाम्बिया ३. नविल बैङ्क
**समूह च :** १. मजलिस २. फुटबल ३. फ्लाविया महर्जन
**समूह छ :** १. काभ्रेपलाञ्चोकको बनेपामा २. सुन्तला ३. पृथ्वीया थापा

## अङ्कजाल फागुन अङ्कको उत्तर



### गोलाप्रथाद्वारा विजयी

**अनिता गैरे**, गैँडाकोट नवलपुर
**सरोज तामाङ**, धनकुटा

**सही जवाफ पठाउने सहभागी :**

चन्द्रबहादुर मुखिया, इस्मा गुल्मी, सहाना श्रेष्ठ, न्यूरोड, बुद्धिबहादुर दुरा मध्य नेपाल लमजुङ, सुयोग दुरा मध्यनेपाल लमजुङ, नारायण लघु, भक्तपुर, खेमराज घिमिरे कामनपा-९, भगवता कुमाल, गुल्मी, किशोर क्षेत्री, धरान, रक्षा चौधरी भैँसेपाटी, ललितपुर, शान्तिकुमारी चौधरी लहान सिराहा, वीरेन्द्रप्रसाद भट्टराई, धनगढी-७ कैलाली, सीता महर्जन, काठमाडौँ, शिला श्रेष्ठ कुलेश्वर काठमाडौँ, देवेन्द्र बलामी, मकवानपुर, मदनमोहनलाल श्रेष्ठ, घट्टेकुलो काठमाडौँ, गौरीश्वर रेग्मी, काठमाडौँ, असीम श्रेष्ठ चिसापानी रामेछाप, हरिबहादुर थापा, कास्की, कृष्णचन्द्र गौतम, सुखीपुर सिराहा, लक्ष्मण रेग्मी, काठमाडौँ, रत्न शाक्य, पुल्चोक, आलोककुमार तिवारी वीरगन्ज-२६ बिर्ता, कविता उप्रेती, माकलबारी काठमाडौँ, रोजन चालिसे, लालबन्दी सर्लाही, बुद्धिमान श्रेष्ठ त्रिपुरेश्वर काठमाडौँ, निर्मला भट्टराई, काठमाडौँ, दिवस भट्टराई, काठमाडौँ, प्रज्ञा वज्राचार्य, खुसिबुँ, रामप्रसाद उप्रेती, काठमाडौँ, प्रविना वज्राचार्य, काठमाडौँ, टीकाप्रसाद घिमिरे, रामेछाप, दिनेशराज पौडेल, काठमाडौँ, अनर्धन घिमिरे, रामेछाप, गङ्गादेवी विष्ट, झापा, करुणा घिमिरे, काठमाडौँ, उमेशकुमार मास्के, विराटनगर, निर्मला श्रेष्ठ, विराटनगर, कल्पना रावल, बर्दिया, प्रकाश भण्डारी 'विवेक' गैँडाकोट नवलपुर, मनोज थापा, कैलाली, उपान्सु थापा, काठमाडौँ, नवीन थापा, कैलाली, सविन पौडेल, ललितपुर।

## फागुन अङ्कको कोठेपद

### गोला प्रथाद्वारा विजयी

**चन्द्रबहादुर मुखिया**, इस्मा गुल्मी
**शरणा पौडेल**, इटहरी

**सही उत्तर मिलाउने अन्य सहभागी**

निर्मला भट्टराई चप्पल कारखाना काठमाडौँ, कृष्णचन्द्र गौतम सुखीपुर सिराहा, पवनकुमार श्रेष्ठ नील वाराही मावि, नारायण लघु, भक्तपुर, रोजन चालिसे, लालबन्दी सर्लाही, गङ्गादेवी विष्ट लखनपुर झापा, शिला श्रेष्ठ कुलेश्वर काठमाडौँ, भगवता कुमाल, गुल्मी, दिवस भट्टराई, काठमाडौँ, बुद्धिमान श्रेष्ठ त्रिपुरेश्वर काठमाडौँ, अञ्जना श्रेष्ठ, धरान-१३, माया रेग्मी, काठमाडौँ, रत्न शाक्य पुल्चोक ललितपुर, खेमराज घिमिरे कामनपा-९, शान्तिकुमारी चौधरी लहान सिराहा, हरिबहादुर थापा, कास्की, मदनमोहनलाल श्रेष्ठ घट्टेकुलो काठमाडौँ, गौरीश्वर रेग्मी, काठमाडौँ, लक्ष्मण रेग्मी, काठमाडौँ, उमेश थापा प्राइम बैङ्क कमलपोखरी, तारा शर्मा, धनकुटा, कल्पना रावल, बर्दिया, गणेश रावल टीकापुर कैलाली, मनोज थापा कैलाली, दिवस भट्टराई, काठमाडौँ, सविन पौडेल, ललितपुर, निर्मला श्रेष्ठ, विराटनगर, उमेशकुमार मास्के, विराटनगर।

## सामान्य ज्ञान प्रतियोगिता फागुनको परिणाम

| | नाम | ठेगाना | प्राप्त अङ्क |
|---|---|---|---|
| विजेता | प्रकाश भण्डारी | गैँडाकोट, नवलपुर | १०० |
| | गङ्गादेवी विष्ट | लखनपुर, झापा | १०० |
| | सुयोग दुरा | मध्यनेपाल, लमजुङ | १०० |
| ४ | शान्तिकुमारी चौधरी | लहान, सिराहा | १०० |
| ५ | रत्न शाक्य | पुल्चोक, ललितपुर | १०० |
| ६ | कृष्णचन्द्र गौतम | सुखीपुर, सिराहा | १०० |
| ७ | मदनमोहनलाल श्रेष्ठ | घट्टेकुलो, काठमाडौँ | १०० |
| ८ | बुद्धिमान श्रेष्ठ | त्रिपुरेश्वर, काठमाडौँ | १०० |
| ९ | कुमारी निर्मला गिरी | कञ्चनपुर | १०० |
| १० | वीरेन्द्रप्रसाद भट्टराई | कैलाली | १०० |

◆ निर्मल

# युवामञ्च कोठेपद प्रतियोगिता, वैशाख-२०८१

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| १ | | २ | ■ | ३ | | ४ | ■ | ५ |
| | ■ | ६ | | | ■ | ७ | | |
| ८ | ९ | | ■ | १० | | | ■ | |
| ■ | | ■ | ११ | | ■ | १२ | | |
| १३ | ■ | १४ | | ■ | १५ | | ■ | |
| १६ | | | ■ | १७ | | ■ | १८ | ■ |
| | ■ | १९ | | | ■ | २० | | २१ |
| २२ | | | ■ | २३ | | | ■ | |
| | ■ | २४ | | | ■ | २५ | | |

## सहभागिताका नियम

१. समाधानसहितको कुपन २०८१ जेठ १५ भित्र आइपुग्नुपर्नेछ।
२. समाधान माथिको कुपनमै पूरा नाम र ठेगाना भरेर पठाइएको हुनुपर्नेछ।
३. केरमेट गरिएका समाधानलाई प्रतियोगितामा समावेश गरिने छैन।
४. सही समाधान पठाउने दुई जनालाई सात-सात सय रुपियाँ पुरस्कारको व्यवस्था गरिएको छ। दुईभन्दा बढी व्यक्तिले सही समाधान पठाएमा गोलाप्रथाद्वारा विजयीको छनोट गरिनेछ।
५. नतिजासम्बन्धी युवामञ्चको निर्णय नै अन्तिम निर्णय हुनेछ।

**नाम :** ..................................

**ठेगाना :** ..................................

..................................

### ठाडो :

१. सबैभन्दा पछिल्लो, पुछार
२. दमाहाभन्दा केही ठूलो एकथरी बाजा
३. रामायण अनुसार जगज्जननी सीताका पतिको एक नाम
४. सहरिया, सहरको बासिन्दा
५. फूलभित्र हुने प्रजननशील तत्त्व
९. 'रिन लागोस् तर .... नलागोस्' उखानको खाली ठाउँमा हुनुपर्ने शब्द
११. मुसलमानको एक पर्व
१३. बेइमानको विपरीतार्थक शब्द
१४. अर्काको अधीनमा रहेको स्थिति, परतन्त्रता
१५. एकथरी धारिलो हतियार
१७. रातभरिमा, एक रातमै
१८. मीठो खानेकुरा (बालबोलीमा)
२०. छाप्रो, टहरो
२१. युद्ध

### तेर्सो

१. कुनै कुरा खान मन नलाग्दाको स्थिति, अरुचि
३. खाद्यसामग्री, रसद, अन्नपानी
६. तातोपन, उष्णता/उग्रता
७. विशेष किसिमले उनिएको फूलको माला, पुष्पहार/एकथरी बुट्टादार सुकुल
८. पिउँदा मात लाग्ने नसालु वस्तु
१०. उब्जनीका दृष्टिले सबभन्दा कमसल जग्गा/जग्गाको एक प्रकार
११. देवताका राजा/स्वर्गका राजा
१२. बाजा बजाउने (व्यक्ति)
१४. दर्जा, तह, स्थान
१५. आँलामा उम्रने रौँ
१६. '......को जाल, भिँगाको काल' उखानको खाली ठाउँमा हुनुपर्ने शब्द
१७. एक ताल/एक दह
१९. धीर व्यक्तिमा हुने गुण, गम्भीरता
२०. केश/खप्पर
२२. मकवानपुर जिल्लामा पर्ने एक पर्यटकीय स्थल
२३. एक फिरन्ते जाति/नेपालको एक आदिवासी
२४. शक्ति, बल
२५. धानका बिरुवा सार्ने काम/खेत रोप्ने काम

## कोठेपद प्रतियोगिता, फागुन अङ्कको उत्तर

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| १ शौ | का | २ लु | ■ | ३ स | र | ४ म | ■ | ५ क्ष |
| क | ■ | ६ कु | कु | र | ■ | ७ म | हि | मा |
| ८ र | ९ सु | वा | ■ | १० ईंव | [illegible] | ता | ■ | या |
| ■ | ल्ला | ■ | ११ ख | ती | ■ | १२ म | रि | च |
| १३ भि | ■ | १४ मा | डा | ■ | १५ पा | थी | ■ | ना |
| १६ च | कि | न | ■ | १७ म | त | ■ | १८ ना | ■ |
| त | ■ | १९ म | न | न | ■ | २० म | ग | २१ छा |
| २२ ना | म | ई | ■ | २३ प | स | ल | ■ | नु |
| म | ■ | २४ न | म्ब | री | ■ | २५ म | नि | षा |

# तपाईंको प्रश्न

## ज्यो. हरिप्रसाद पौडेलको उत्तर

नाम : ऋचा ढकाल
जन्म स्थान : भरतपुर, चितवन
जन्म मिति : २०४५ असार २ गते आइतबार
जन्म समय : दिवा : १२:२० बजे

मेरो वर्तमान ग्रहदशा, दाम्पत्य सुखसम्बन्ध, सन्तानको सुख र भविष्य के कस्तो होला ।

तपाईंको वर्तमान समयमा चलेको उल्कादशाका कारण सामान्य अस्वस्थताका साथै व्यर्थको विवादमा समेत पार्ने समय रहेको छ । यस वर्षका लागि लेनदेनसम्बन्धी आर्थिक कारोबारका साथै ठूला लगानी नगर्दा नै राम्रो हुने छ । दाम्पत्य सुखसम्बन्ध असल देखिन्छ । भाग्य बलियो लिएर आउनुभएकाले भविष्य सुखमय छ । लक्ष्मीको कृपा रहेकाले भविष्यमा आर्थिक अभावको स्थिति आउने छैन । दशौँ चन्द्रमा भएकाले धनसम्पत्ति धेरै नभए पनि जीवन सुखमय तरिकाले बित्नेछ । वर्तमान समयमा चलेको उल्का दशाका कारण सामान्य चोटपटकको समेत सम्भावना देखिएकाले यात्रा एवं सवारी चलाउँदा विशेष सतर्कता अपनाउनुपर्ने समय रहेको छ । नयाँ वर्षमा मनोरञ्जन एवं हर्ष आनन्दका साथै यात्राका अवसरसमेत मिल्ने छन् ।

---

नाम : रमेश थपलिया
जन्म स्थान : हाँडीगाउँ, काठमाडौँ
जन्म मिति : २०६० भदौ २४ गते
जन्म समय : बे.४:२० बजे

मेरो विद्या, भाग्य, कर्म के कस्तो देखिन्छ ? कृपया स्पष्ट खुलाइदिनु भए धेरै धेरै कृतज्ञ हुने थिएँ ।

रमेशजी तपाईंको जन्मकुण्डली विचार गर्दा ग्रहयोगहरू राम्रो रहेकाले भविष्यमा राम्रै सफलता प्राप्त गर्ने ग्रहयोग देखिन्छ । वर्तमान समयमा चलेको उल्कादशाका कारण पढाइमा बाधाअड्चनका साथै मन नलागेको देखिन्छ । भविष्यमा विशेषगरी वाणिज्य व्यापार क्षेत्रमा उन्नति प्रगति राम्रो हुने ग्रहयोग रहेको छ । स्वव्यवसाय नै जीविकोपार्जनको आधार बन्ने योग रहेको छ । वर्तमान समयमा चलेको उल्कादशाको दोष निवारणका लागि स्वस्तिशान्ति गराएमा दोष निवृत्ति भएर जाला ।

---

नाम : रमेश पौडेल
जन्म स्थान : गैँडाकोट नपा–२, शिलान्यासचोक
जन्म मिति : २०५५ फागुन ९ गते
जन्म समय : दिउँसो ११:५ बजे

मेरो वर्तमान समयको ग्रहदशाका साथै जन्मराशि र शुभ अङ्क के होला ? विद्या, भाग्य र भविष्य के कस्तो देखिन्छ ?

वर्तमान समयमा तपाईंलाई सङ्कटाको दशा चलेकाले सामान्य अस्वस्थताका साथै साथीसङ्गतमा विशेष विचार पुर्‍याउनुपर्ने समय रहेको छ । पढाइमा अनावश्यक बाधाअड्चन आइपर्ने देखिन्छ । भाग्य राम्रो देखिएकाले समुज्ज्वल भविष्यको सम्भावना देखिन्छ । विद्यामा उच्च सफलता प्राप्त गर्ने देखिन्छ । चरलग्नमा जन्म भएकाले विदेशमा भाग्योदयको योग रहेको छ । विवाहका लागि ३० वर्ष उप्रान्तको समय राम्रो देखिन्छ । कुण्डलीमा माङ्गलिक योग पर्न गएकाले चिना मिलाएर विवाह गर्दा राम्रो होला । तपाईंका लागि ३ अङ्क बुधबार विशेष फलदायी रहेका छन् ।

---

नाम : शिवशरण अर्याल
जन्म स्थान : धरान–६, सुनसरी
जन्म मिति : २०५९ असोज ११ गते
जन्म समय : अपराह्न ३:१५ बजे

मेरो विद्या, भाग्य र वर्तमान समयका ग्रहदशा हे कस्ता रहेका छन् ? कृपया बताइदिनुभए आभारी हुने थिएँ ।

तपाईंको वर्तमान समयमा सिद्धाको दशा चलेकाले स्वदेश एवं विदेश चौतर्फी सफलताको समय चलेको छ । सोचेका योजनामा सफलता प्राप्त हुने छ । जन्मकुण्डलीमा बृहस्पति राम्रो भएकाले विद्यामा उच्च सफलता मिल्ने देखिन्छ । विशेष गरी विज्ञान र गणित विषय राम्रो होला । कुण्डलीमा भाग्य बलियो देखिएकाले भविष्यमा उच्च सफलता प्राप्त हुने छ । यही नयाँ वर्षबाट भाग्योदयको योग बनेकाले गर्न आँटेका काममा सफलता प्राप्त हुँदै जाने छ ।

---

नाम : अर्चना थापामगर
जन्म स्थान : गैँडाकोट–२, नवलपरासी
जन्म मिति : २०४९ जेठ २ गते
जन्म समय : बिहान १:२० बजे

मेरो वर्तमान समयका ग्रहदशा, वैदेशिक यात्रा, स्वास्थ्य, रोजगारीका साथै शुभ रङ, अङ्क, बार बताइदिनुभए कृतज्ञ हुने थिएँ ।

धन्यवाद । तपाईंको वर्तमान समयमा सङ्कटादशा चलेकाले वैदेशिक यात्राका लागि समय त्यति राम्रो देखिन्न । सामान्य अस्वस्थताका साथै सोचेको काममा अनावश्यक बाधाअड्चन आइपर्ने देखिन्छ । वर्षको उत्तरार्धबाट क्रमशः सोचेका योजनामा सफलता मिल्दै जाने देखिन्छ । मनोरञ्जनका साथै हर्ष आनन्दका अवसरसमेत मिल्ने छन् । नोकरीका लागि दुई वर्षपछि नै राम्रो सफलता मिल्ने छ । तपाईंका लागि बुधबार अनि ६ अङ्क र कात्तिक, मङ्सिर महिना विशेष फलदायी रहेका छन् ।

# २०८१ सालको राशिफल

◆ ज्यो. हरिप्रसाद पौडेल



**मेष** सफलताको वर्ष रहेको छ। शारीरिक आरोग्यताका साथै मानसिक प्रसन्नता अनुकूल रहने छ। अध्ययन अध्यापनमा अभिरुचि बढेर जानुका साथै बौद्धिक क्रियाकलापमा समेत मन लाग्ने छ। मनले सोचेका योजनाहरूमा सफलता प्राप्त हुने देखिन्छ। आर्थिक पक्षका काम सफल रहने छन्। प्रतिस्पर्धामा सफलताको योग छ। नवीन कार्यको थालनी हुनुका साथै गरेको काममा अभिवृद्धि गराउने समय छ। राहु ग्रहको प्रतिकूलताले गर्दा अपजस, अनावश्यक खर्च बढाउनुका साथै सामान्य विवादमा समेत पार्ने छ। धार्मिक एवं सामाजिक कार्यमा अभिरुचि लाग्ने छ। नोकरीमा पदोन्नतिको सम्भावना बलियो छ। घर परिवारमा माङ्गलिक कार्यको आरम्भ होला। रमाइलो यात्राका साथै मनोरञ्जनका अवसरसमेत मिल्ने छन्। सफलताको हिसाबले असार, असोज, माघ र फागुन महिना विशेष फलदायी रहने छन्।

**वृष** स्थान परिवर्तन एवं वैदेशिक यात्राको सम्भावना छ। अध्ययन अध्यापनमा अनावश्यक बाधाअड्चन आइपर्ने छन्। शारीरिक आरोग्यता अनुकूल रहने छ। घरायसी खर्चको मात्रा बढेर जानाले आर्थिक अभावको स्थिति देखा पर्नेछ। जग्गाजमिनसम्बन्धी झैझमेला आइपर्ने छ। वर्षको उत्तरार्धमा नयाँ कामको थालनी हुने योग छ। पारिवारिक सुखसन्तोष अनुकूल रहने छ। सामान्य बृहस्पति प्रतिकूल रहेकाले मानसिक चिन्ता एवं अस्थिरता भने बढेर जाने छ। अनावश्यक विवादको सम्भावना देखिएकाले बोलीचालीमा विचार पुऱ्याउनुपर्ने देखिन्छ। सफलताको हिसाबले साउन, कात्तिक, फागुन र चैत महिना विशेष लाभदायी रहने छन्।

**मिथुन** मध्यम फलदायी वर्ष रहेको छ। सोचेका योजनामा सफलताका लागि विशेष लगनशीलताको आवश्यकता पर्ने देखिन्छ। पठनपाठनमा अनावश्यक बाधा व्यवधान आइपर्ने छन्। सामान्य अस्वस्थताको सम्भावना देखिएकाले खानपानमा विशेष ख्याल पुऱ्याउनुपर्ने छ। आर्थिक पक्षका काममा मध्यम सफलता प्राप्त होला। वर्षको उत्तरार्धमा स्थान परिवर्तन एवं लामो यात्राको सम्भावना छ । पारिवारिक सुखसन्तोष अनुकूल रहने छ। घर परिवारमा धार्मिक एवं माङ्गलिक कार्यको आयोजना हुने छ। सामाजिक कार्यमा समेत अभिरुचि लाग्ने छ। सफलताको हिसाबले भदौ, मङ्सिर, चैत र वैशाख महिना विशेष फलदायी रहेका छन्।

**कर्कट** वर्षभरि नै अढैया शनिदशा रहनाले गर्न आँटेका काम र मनले सोचेका योजनामा ढिलासुस्ती गराउने देखिन्छ। शारीरिक आरोग्यता अनुकूल रहने छ। एकादश बृहस्पतिका कारण मानसिक प्रसन्नता बढेर जानुका साथै कार्यक्षमतामा समेत अभिवृद्धि भएर जाने छ। धार्मिक एवं सामाजिक कार्यमा मन लाग्ने छ। रमाइलो पारिवारिक वातावरणको माहोल रहला। आर्थिक पक्षका काममा राम्रै सफलता मिल्ने ग्रहयोग रहेको छ। ठूलो आर्थिक लगानीका साथै लेनदेनसम्बन्धी कारोबारमा विशेष सावधानी अपनाउनुपर्ने देखिन्छ। पठनपाठनका साथै बौद्धिक क्रियाकलापमा मन लाग्ने छ। सफलताको हिसाबले असोज, पुस, वैशाख र जेठ महिना विशेष फलदायी रहने छन्।

**सिंह** मध्यम फलदायी वर्ष रहेको छ। शारीरिक आरोग्यताका साथै मानसिक प्रसन्नता अनुकूल रहला। अध्ययन अध्यापनसम्बन्धी कार्यमा मध्यम सफता मिल्ने छ। वर्षको उत्तरार्धमा नयाँ कामको थालनी हुने सम्भावना रहेको छ। आर्थिक पक्षका काममा राम्रै सफता मिल्ने ग्रहयोग रहेको छ। घरायसी खर्चको मात्रा भने केही बढेर जानुका साथै सन्तानको चिन्ताले केही बढी नै पिरोल्ने देखिन्छ। सामान्य अपजश एवं मानहानीको समेत सम्भावना देखिन्छ। ठूला लगानी एवं नयाँ कारोबार गर्नका लागि समय त्यति उत्तम देखिन्न। वर्षको उत्तरार्धमा रमाइलो यात्रा एवं मनोरञ्जनका अवसर मिल्ने छन्। सफलताको हिसाबले कात्तिक, माघ, जेठ र असार महिना विशेष फलदायी रहने छन्।

**कन्या** उत्तम फलदायी वर्ष रहेको छ। महत्त्वपूर्ण नयाँ अवसर मिल्नाले मन रमाउने छ। धार्मिक एवं गर्न आँटेका काम र मनले सोचेका योजनाले साकार रूप ग्रहण गर्ने छन्। हर्ष आनन्द एवं मनोरञ्जनका अवसर प्रशस्त मिल्ने छन् । पठनपाठनका साथै बौद्धिक क्रियाकलापमा गहिरो अभिरुचि लाग्ने छ। घर परिवारमा धार्मिक एवं माङ्गलिक कार्यको आयोजना हुने छन्। उच्च मनोबलका साथ कार्यक्षमतामा उल्लेख्य अभिवृद्धि भएर जाने छ। धार्मिक एवं सामाजिक कार्यमा समेत मन लाग्ने छ। कर्मचारी वर्गका लागि पदप्रतिष्ठा अभिवृद्धि भएर जाने सम्भावना छ। सफलताको हिसाबले मङ्सिर, फागुन, असार, साउन महिना विशेष फलदायी रहेका छन्।

**तुला** आठौँ बृहस्पतिले गर्दा मानसिक दुबिधा, अस्थिरता एवं अनावश्यक चिन्ता बढेर जाने छ। अध्ययन अध्यापनसम्बन्धी बौद्धिक क्रियाकलापमा बाधाअड्चन आइपर्नाले सोचे जस्तो सफलताका लागि धेरै लगनशीलता आवश्यक पर्ने देखिन्छ। सन्तान एवं परिवारको चिन्ताले केही बढी नै पिरोल्ने छ। सामान्य अस्वस्थताको समेत सम्भावना रहेकाले खानपानमा विशेष ख्याल पुऱ्याउनुपर्ने छ। आर्थिक पक्षका काममा मध्यम सफलताको योग रहेको छ। वर्षको उत्तरार्धमा वैदेशिक यात्राको सम्भावना रहेको छ। सफलताका हिसाबले पुस, चैत, साउन एवं भदौ महिना विशेष लाभदायी रहने छन्।

**वृश्चिक** मानसिक प्रसन्नता एवं हर्ष आनन्दका अवसर आउने छन् । शारीरिक आरोग्यतामा क्रमशः सुधारको स्थिति देखा पर्नेछ। मानसम्मान एवं पदप्रतिष्ठा बढेर जाला। आर्थिक

कारोबारमा क्रमशः सुधारको स्थिति देखा पर्नेछ। वर्षभरि नै अढैया शनिदशाका कारण गर्न आँटेका काम र मनले सोचेका योजनामा ढिलासुस्ती गराउने देखिन्छ। पठनपाठनका साथै बौद्धिक क्रियाकलापमा अभिरुचि बढेर जाला। धार्मिक एवं सामाजिक क्षेत्रका कामबाट मानसम्मान मिल्ने छ। सन्तानको चिन्ताले भने केही पिरोल्ने छ। दाम्पत्य सुखसम्बन्धमा मिठासको अनुभूति गराउला। सफलताको हिसाबले माघ, वैशाख, भदौ एवं असोज महिना विशेष फलदायी रहने छन्।

**धनु** मध्यम फलदायी वर्ष रहेको छ। गर्न आँटेका काम तथा मनले सोचेका योजना मन्दगतिमा अगाडि बढ्ने छन्। सामान्य अस्वस्थताको सम्भावना रहेकाले खानपानमा विशेष ख्याल गर्नुपर्नेछ। सन्तान एवं परिवारको चिन्ताले केही बढी नै पिरोल्ने छ। आर्थिक पक्षका काममा मध्यम सफलता प्राप्त होला। दाम्पत्य सुखसम्बन्ध अनुकूल रहने छ। अध्ययन अध्यापनसम्बन्धी बौद्धिक क्रियाकलापमा केही बाधाअड्चन आइपर्ने छन्। वर्षको उत्तरार्धमा आर्थिक लगानी फलदायी होला। वैदेशिक यात्राको अवसर प्राप्त होला। शारीरिक आरोग्यता अनुकूल रहने छ। सफलताको हिसाबले माघ, फागुन, जेठ, असोज एवं कात्तिक महिना विशेष फलदायी रहने छन्।

**मकर** वर्षभरि नै साढेसात शनिदशा रहनाले गर्न आँटेका काममा ढिलासुस्ती गराउने छ। सामान्य अस्वस्थताका लक्षण देखा पर्नेछन्। घरायसी खर्चको मात्रा बढेर जानाले आर्थिक कठिनाइको स्थिति आउन सक्ने छ। ठूलो लगानी एवं लेनदेनसम्बन्धी आर्थिक कारोबार नगर्दा नै राम्रो हुने छ। पठनपाठनका साथै बौद्धिक क्रियाकलापमा अभिरुचि लाग्ने छ । घर परिवारमा शुभ माङ्गलिक कार्यको आयोजना हुने छ। वर्षको उत्तरार्धमा रमाइलो यात्राका साथै मनोरञ्जनका अवसर आउने छन्। धार्मिक कार्यका साथै सामाजिक कार्यमा समेत अभिरुचि लाग्ने छ। सफलताको हिसाबले चैत, असार, कात्तिक र मङ्सिर महिना विशेष फलदायी रहने छन्। शनिदशाको स्वस्ति शान्तिका साथै गरिबलाई अन्न दान गर्दा साढेसात शनिदशाको दोष निवारण भएर जाने छ।

**कुम्भ** वर्षभरि नै मध्य साढेसात शनिदशा रहनाले सोचेका योजनामा अनावश्यक बाधाअड्चन आइपर्नेछन्। अनावश्यक विवादमा पार्न सक्ने सम्भावना देखिएकाले बोलीचालीमा विशेष सावधानी अपनाउनुपर्ने देखिन्छ । सामान्य अस्वस्थताका लक्षण देखा पर्नेछन्। गरेको काममा अपजससमेत आउने योग छ। सामान्य चोटपटकको योग पर्न गएकाले यात्रा एवं सवारी चलाउँदा विशेष सावधानी अपनाउनुपर्ने देखिन्छ। सन्तान एवं घरायसी चिन्ताले केही बढी नै पिरोल्ने देखिन्छ । लेनदेनसम्बन्धी आर्थिक कारोबार नगर्दा राम्रो हुने छ। कर्मचारी वर्गका लागि वर्ष मध्यम रहेको छ भने व्यापारी वर्गका लागि केही हानिनोक्सानी बेहोर्नुपर्ने ग्रहयोग रहेको छ। विद्यार्थी वर्गका लागि पठनपाठनमा अनावश्यक बाधाअड्चनको सामना गर्नुपर्ने देखिन्छ। सफलताको हिसाबले वैशाख, साउन, मङ्सिर एवं पुस महिना विशेष लाभदायी रहने छन्।

**मीन** वर्षभरि नै आद्य साढेसात शनिदशा रहनाले सोचेका योजना र गर्न आँटेका काममा अनावश्यक बाधाअड्चन आइपर्नुका साथै ढिलासुस्तीसमेत गराउने देखिन्छ। शनिदोष शान्तिका उपाय गर्दा राम्रो होला। यात्रा एवं सवारी चलाउँदा विशेष सावधानी अपनाउनुपर्ने ग्रहयोग रहेको छ। आकस्मिक यात्रा एवं स्थानान्तरणको योग बनेको छ। पठनपाठनमा मध्यम सफलता प्राप्त होला। शारीरिक आरोग्यता सामान्य प्रतिकूल रहन सक्ने छ। नयाँ कारोबार एवं ठूला आर्थिक लगानी गर्न समय त्यति राम्रो छैन। वर्षको उत्तरार्धमा मनोरञ्जनका अवसर मिल्ने छन्। सामान्य विवादको सम्भावना रहेकाले बोलीचालीमा विशेष विचार पुऱ्याउनुपर्ने देखिन्छ। सफलताको हिसाबले जेठ, भदौ, पुस र माघ महिना विशेष फलदायी रहने छन्।

## उत्तर

१. हजुरबुवा र नातिनी।

३. कुकुर १७ किलो, बिरालो ७ किलो र खरायो ३ किलो।

## तपाईंको प्रश्न, हाम्रा ज्योतिषी

नाम : ....................

जन्म स्थान : .................... जन्म मिति : ....................

जन्म बार : ....................

जन्म समय : .................... ठेगाना : ....................

प्रश्न : ....................

....................

....................

जन्म समय अनिवार्य छ।

आफ्नो भविष्यबारे जिज्ञासा राख्नुहुने पाठकले कुपन भरी हरेक महिनाको १५ गतेभित्र युवामञ्चमा आइपुग्ने गरी पठाउनुहोला वा इमेल गर्नुहोला। तपाईंको जिज्ञासाको जवाफ ज्योतिषाचार्य हरिप्रसाद पौडेलले दिनुहुने छ।

# सामान्यज्ञान प्रतियोगिता वैशाख २०८१

एक समूहमा तीन प्रश्न रहने गरी सात समूहमा प्रश्न सोधिएको छ। यस प्रकार कुल २१ प्रश्न यस प्रतियोगितामा समावेश गरिएको छ। प्रतियोगितामा समावेश प्रत्येक समूहको अङ्क भार फरक छ। सम्बन्धित अङ्क भार समूहको अगाडि उल्लेख गरिएको छ तर कुनै पनि समूहमा समावेश गरिएका प्रश्नको सही उत्तरमा दिइने अङ्क भने फरक-फरक छ। उदाहरणका लागि पहिलो समूहको अङ्क भार ६ हो र त्यसमा तीन प्रश्न समावेश छन। ती तिनै प्रश्नको उत्तरमा पाइने अङ्क फरक हुनेछ तर समूहको कुल अङ्क भारभन्दा बढी चाहिँ हुनेछैन। जस्तो समूह क मा समावेश तीन प्रश्नमा पहिलो, दोस्रो र तेस्रो प्रश्नको उत्तरमा पाइने अङ्क ३, १ वा २ हुनसक्छ।

एवं प्रकारले सबै समूहको उत्तर दिनुपर्नेछ। सही उत्तरमा अङ्क प्राप्त हुनेछ। यस प्रकारले अङ्कका आधारमा प्रथम, द्वितीय र तृतीय हुनेलाई क्रमशः रु. १५००/-, १०००/- र ५००/- पुरस्कार दिइनेछ। अङ्क बराबर भएमा गोलाप्रथाद्वारा निर्णय लिइनेछ।

अधिकतम अङ्क ल्याउने १० जनाको नामावली प्रकाशित गरिनेछ।

## प्रश्न

**समूह (क), कुल अङ्क भार– ६**

१. विश्वमा सबैभन्दा धेरै प्राकृतिक ताल भएको देश कुन हो ? [१]

२) एक हप्तामा कति मिनेट हुन्छ ? [३]

३) नेपालको पहिलो राजमार्ग कुन हो ? [२]

**समूह (ख), कुल अङ्क भार– ८**

१) अमेरिकालाई कुन देशले स्वतन्त्रताको मूर्ति उपहारमा दिएको थियो ? [३]

२) एउटा मानव कानमा कति वटा हाड हुन्छन् ? [३]

३) विश्वमा सबैभन्दा धेरै कफी उपभोग गर्ने देश कुन हो ? [२]

**समूह (ग), कुल अङ्क भार– १२**

१) छिन्नमस्ता मन्दिर नेपालको कुन जिल्लामा रहेको छ ? [५]

२) दोस्रो मिस नेपालको नाम के हो ? [३]

३) औद्योगिक क्रान्ति कुन देशमा सुरु भएको थियो ? [४]

**समूह (घ), कुल अङ्क भार–त १४**

१) जापानको राष्ट्रिय खेल कुन हो ? [७]

२) युवामञ्चका पहिलो सम्पादक को हुन् ? [३]

३) आधुनिक ओलम्पिकमा कहिलेदेखि महिलाले सहभागी हुन पाएका हुन् ? [४]

**समूह (ङ), कुल अङ्क भार– १८**

१) कुन जनावरको तीन मुटु र नीलो रगत हुन्छ ? [६]

२) चीनमा गधाको छालाबाट बनाइने औषधिको नाम के हो ? [६]

३) नारायणहिटी दरबारका डिजाइनर को हुन् ? [६]

**समूह (च), कुल अङ्क भार– २०**

१) कुन हिमाललाई सेतो हिमाल पनि भनिन्छ ? [६]

२) पहिलो आइफोन सार्वजनिक गरिएको वर्ष कुन हो ? [६]

३) मानव शरीरमा सबैभन्दा बलियो मांसपेशी कुन हो ? [८]

**समूह (छ), कुल अङ्क भार २२**

१) कुन सन्धिद्वारा पहिलो विश्वयुद्ध अन्त्य भयो ? [८]

२) नेपालमा वाइफाई निःशुल्क गरिएको पहिलो जिल्ला कुन हो ? [६]

३) सबैभन्दा चर्को आवाज निकाल्ने जनावर कुन हो ? [८]

फागुन अङ्कको परिणाम पृष्ठ ७४ मा

उत्तर २०८१ जेठ १५ गतेसम्म प्राप्त भइसक्नु पर्नेछ।

**२०८१ साल वैशाखको सामान्यज्ञान**

**समूह (क), कुल अङ्क भार– ६**

१) ............................................ [१]
२) ............................................ [३]
३) ............................................ [२]

**समूह (ख), कुल अङ्क भार– ८**

१)............................................ [३]
२) ............................................ [३]
३) ............................................ [२]

**समूह (ग), कुल अङ्क भार– १२**

१) ............................................ [५]
२) ............................................ [३]
३) ............................................ [४]

**समूह (घ), कुल अङ्क भार– १४**

१) ............................................ [७]
२) ............................................ [३]
३) ............................................ [४]

**समूह (ङ), कुल अङ्क भार– १८**

१) ............................................ [६]
२) ............................................ [६]
३) ............................................ [६]

**समूह (च), कुल अङ्क भार– २०**

१) ............................................ [६]
२) ............................................ [६]
३) ............................................ [८]

**समूह (छ), कुल अङ्क भार २२**

१) ............................................ [८]
२) ............................................ [६]
३) ............................................ [८]

नाम : ..........................................................

ठेगाना : ..........................................................

# २०८० फागुन १ देखि ३० गतेसम्मका राष्ट्रिय घटना

| | |
|---|---|
| फागुन १ गते : | पाल्पामा जिप दुर्घटना हुँदा आठ जनाको मृत्यु, १९ घाइते । |
| फागुन ३ गते : | संविधान र ऐनको मर्मको भावनाअनुरूप नभएकाले आयोगमा दर्ता कायम रहेका १९ दललाई नाम परिवर्तन गर्न निर्वाचन आयोगको निर्देशन । |
| फागुन ६ गते : | मेलम्ची खानेपानी आयोजनामा आर्थिक अनियमितता गरेको आरोपमा तीन पूर्वसचिवसहित १४ जनाविरुद्ध मुद्दा । |
| – | मधेश प्रदेशका मुख्यमन्त्री सरोजकुमार यादवलाई प्रदेश सभाबाट तेस्रो पटक विश्वासको मत प्राप्त । |
| – | मन्त्रीपरिषद् बैठकद्वारा नेपाल दूरसञ्चार प्राधिकरणको अध्यक्षमा भूपेन्द्र भण्डारी नियुक्त । |
| फागुन ८ गते : | अनुमति लिएकोभन्दा बढी काठ कटानी गरेको आरोपमा अख्तियार दुरुपयोग अनुसन्धान आयोगद्वारा कपिलवस्तुका प्रदेश सभा सदस्यसहित १९ जनाविरुद्ध भ्रष्टाचार मुद्दा दायर । |
| फागुन ९ गते : | काठमाडौँको सीतापाइलामा हथौडा प्रहार गरी श्रीमती र धारिलो चक्कु प्रहार गरी छोरी र नातिनीको हत्यापछि राजु घिमिरे भनिने काजी विकद्वारा आत्महत्या । |
| फागुन १० गते : | त्रिभुवन विश्वविद्यालय (त्रिवि) को २० औँ उपकुलपतिमा प्राडा केशरजङ्ग बराल नियुक्त । |
| फागुन ११ गते : | अख्तियार दुरुपयोग अनुसन्धान आयोगद्वारा नापी कार्यालय ललितपुरका नापी सर्वेक्षक रामवीर यादवसहित पाँच जनाविरुद्ध भ्रष्टाचार मुद्दा दायर । |
| फागुन १३ गते : | राष्ट्रपति रामचन्द्र पौडेलद्वारा पूर्वराष्ट्रपति डा. रामवरण यादवलाई 'महेन्द्रनारायण निधि राष्ट्रिय पुरस्कार तथा सम्मान–२०८०' बाट सम्मानित । |
| – | प्रतिनिधि सभा सदस्य र प्रदेश सभा सदस्य रिक्त रहेको एक एक पदको उपनिर्वाचन आगामी वैशाख १५ गते गर्ने निर्णय । |
| – | झापा बालुवाटारको सरकारी जग्गा व्यक्तिका नाममा दर्ता गरेको अभियोगमा अख्तियार दुरुपयोग अनुसन्धान आयोगद्वारा दुई फरक मुद्दामा ३५९ जनाविरुद्ध भ्रष्टाचार मुद्दा दायर । |
| फागुन १४ गते : | भजन शिरोमणि भक्तराज आचार्यको निधन । |
| फागुन १५ गते : | प्रभु बैङ्कका डेपुटी सिइओसहित १० जना पक्राउ । |
| फागुन १८ गते : | सर्वोच्च अदालतद्वारा बाँसबारी छाला तथा जुत्ता उद्योगको नाममा रहेको जग्गा चाँदबाग रेसिडेन्सी प्रालिबाट फिर्ता गराउने मालपोत कार्यालय डिल्लीबजारको निर्णय झिकाउने आदेश । |
| फागुन २१ गते : | सत्ता साझेदार राजनीतिक दलको समीकरण परिवर्तन, मन्त्रीपरिषद्मा तीन सदस्य नियुक्त । |
| – | राष्ट्रिय सभाका निर्वाचित १९ सदस्यद्वारा शपथग्रण । |
| फागुन २२ गते : | नेपाली कांग्रेसद्वारा प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' नेतृत्वको सरकारलाई दिएको समर्थन फिर्ता । |
| – | नेपाल कम्युनिस्ट पार्टी (एमाले) को प्रमुख सचेतकमा महेश बर्तौला र सचेतकमा सुनिता बराल मनोनीत । |
| फागुन २३ गते : | मन्त्रीपरिषद् विस्तार, एमालेका आठ, माओवादीका पाँच, रास्वपाका चार र एकीकृत समाजवादीका दुई जना मन्त्री नियुक्त । |
| फागुन २४ गते : | नेपाल सरकारको प्रवक्तामा सञ्चार तथा सूचना प्रविधिमन्त्री रेखा शर्मालाई तोकियो । |
| – | प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' द्वारा तीन वटा विश्वविद्यालयमा निमित्त उपकुलपति नियुक्त । |
| फागुन २७ गते : | अख्तियार दुरुपयोग अनुसन्धान आयोगद्वारा दुई फरक विषयमा २२ जनाविरुद्ध मुद्दा दायर । |
| फागुन २८ गते : | राष्ट्रिय सभा अध्यक्षको निर्वाचनका लागि माओवादीबाट नारायणप्रसाद दाहाल र कांग्रेसबाट नेता युवराज शर्माको उम्मेदवारी दर्ता । |
| फागुन २९ गते : | राष्ट्रिय सभा अध्यक्षमा नारायणप्रसाद दाहाल निर्वाचित । |
| फागुन ३० गते : | प्रधानमन्त्रीलाई विश्वासको मत, २६८ सांसदमध्ये १५७ सदस्यको मत पक्षमा र ११० मत विपक्षमा तथा एक सदस्य तटस्थ । ■ |

*– सरस्वती खत्री, क्षेत्री*